● वर्ष ९ ● अङ्क ९ ● वैशाख २०६५ ● पूर्णाङ्क १०५


**सम्पर्क कार्यालयहरू**


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–४,
  फोन: ०६४-४२९३१८
- **कास्की**, पो.उ.म.न.पा.-१०,
  रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेंसीशहर-९, शेराबजार
- **भक्तपुर**, सूर्यविनायक,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, नाला जाने बाटो
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-५६०१६९
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, प्रगतिनगर घुम्ती
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## राजयोग विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# आफ्नै कुरा

सर्वप्रथम त नववर्ष २०६५ को पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्र समस्त साधक, साधिका, शुभ-चिन्तक, कार्यकर्ता एवं पाठक वर्गमा सुख, समृद्धि, भौतिक उन्नतिका साथ आध्यात्मिक उन्नति, प्रगति हुँदै जाओस् भनी परमपूज्य सद्‌गुरुदेवहरुसँग प्रार्थना गर्दै मङ्‌गलमय शुभ-कामना व्यक्त गर्दछ।

बितेको वर्ष कसैको लागि अनुकूल रह्यो होला, कसैको लागि प्रतिकूल। जीवनको दौरानमा स्वभाविकरुपमा यस्ता स्थिति, परिस्थितिहरु आउने गर्छन्, जाने गर्छन्। सिद्धाश्रम शक्ति केन्द्रका लागि पनि गत वर्ष उपलब्धिमूलक रह्यो। ठाउँ-ठाउँमा सम्पर्क कार्यालयहरु खुले, आरती सञ्चालन केन्द्र, प्रचार-प्रसार केन्द्रहरु खुले, हजारौं व्यक्तिहरु आश्रमसँग जोडिए, कार्यक्रमहरु सफलतापूर्वक सम्पन्न भए। राष्ट्रियरुपमा मात्र नभएर सिद्धाश्रम शक्ति केन्द्र गत वर्ष अन्तर्राष्ट्रियरुपमा पनि चिनिन पुग्यो। एक वर्षभित्र दुई-दुईपटक अन्तर्राष्ट्रियरुपमा पनि कार्यक्रमहरु सफलतापूर्वक सम्पन्न भए। यी, यस्तै सफल कार्यक्रमहरुले सिद्धाश्रम शक्ति केन्द्रलाई सफलताका सिँढीहरु चढाएको छ।

गत वर्षले देशमा धेरै आरोह, अवरोह ल्याएको पाइयो। देश राजनीतिक रुपान्तरणको सङ्‌ग्राममा होमियो। साँच्चिकै रुपान्तरणको सङ्‌केत देशमा देखा परेको छ। राजनैतिक रुपान्तरणको प्रसङ्गमा पहिले-पहिले पनि हामीले चर्चा गरेका थियौं। फलस्वरुप पहिलेको स्थिति रुपान्तरण भएर नयाँ संरचनाको लक्षण देखा परिरहेको छ। नयाँ वातावरणको सृजना भएर देश नयाँ शैलीबाट अगाडि बढ्ने माहौल बन्नु नै राजनैतिक रुपान्तरणको स्पष्ट दिशा-निर्देश मान्नु पर्दछ। आशा गरौं– राजनैतिक रुपान्तरणसँगै देशमा शान्ति, आनन्दको वातावरण बन्नेछ र आर्थिक रुपान्तरण, सामाजिक रुपान्तरण, सांस्कृतिक रुपान्तरणको वातावरण निर्माण हुनेछ। देश अग्रगमनको दिशातर्फ उन्मुख हुँदै आध्यात्मिक वातावरण अगाडि बढ्नेछ।

यसपालिको अङ्कलाई 'राजयोग विशेष'को रुपमा निकालेका छौं। राजयोग आफैंमा उच्चकोटीको दुर्लभ विषय हो। यसका प्रणेता स्वयं गुरु गोरखनाथ हुनुहुन्छ। समाजमा हेर्‍यौं भने राजयोग एउटा नारा बनेको छ। राजयोगलाई सस्तो प्रचारको साधन बनाइएको छ। राजयोगको गूढ रहस्यलाई नबुझ्नेहरु व्याख्याकार बनेका छन्, विद्वान् बनेका छन्। यस अङ्‌कमा केही मात्रामा हामीले खोतल्ने कोशिस गरे पनि राजयोगको विराटताभित्रका कैयौं गूढ रहस्यलाई यस अङ्कमा विविध कारणले राख्न सकिएन। पाठकसमक्ष जे जति राखिएका छन्, तिनीहरुलाई अंशरुप ठानी ग्रहण गरिदिनुहोला।

अन्त्यमा, यस अङ्कको प्रकाशनमा भए, गरेका कमी-कमजोरी, न्यूनताको लागि परमपूज्य सद्‌गुरुदेवहरुसमक्ष र यहाँहरुसमक्ष क्षमा माग्दै आवश्यक सल्लाह, सुझाव र प्रतिक्रियाको आशा गर्दछौं। अस्तु!

# राजयोग र ब्रह्मभाव

पातञ्जल योग सूत्रमा भनिएको छ– ततः क्लेश कर्म निवृत्ति । क्लेश र कर्मको नाश नै मानव जीवनको लक्ष्य हो । क्लेश र कर्म परस्पर सम्बन्धित छन् । जन्मौंजन्मदेखिका कर्म, जुन प्रत्येक जन्ममा संघीभूत भएर हामीसितै आइरहेका छन्, हाम्रा क्लेशका आधार हुन् । यी कर्मको समूल उच्छेद नै अध्यात्मको विषयवस्तु हो । भिन्दाभिन्दै योगहरूमा भिन्दाभिन्दै ढङ्गबाट यसै विषयको विवेचना र निदान गर्ने प्रयास गरिएको पाइन्छ– चाहे त्यो ज्ञानयोग होस् वा कर्मयोग । प्रेमयोग, भक्तियोगका साथसाथै राजयोगको पनि यही नै विषय हो । यस विषयमा राजयोगले केवल व्याख्या अथवा ज्ञान स्तरमा निदान मात्र प्रस्तुत गर्दैन, बरु क्रमबद्धरूपमा आजको वैज्ञानिक पद्धतिअनुरूप यसको सटीक उपाय पनि प्रस्तुत गर्दछ । राजयोगले यस तथ्यलाई स्पष्ट गर्दछ– ज्ञान कसरी बुद्धिगम्य नभएर बोधिगम्य हुन्छ । सरल उदाहरणको रूपमा भन्नु पर्दा जसरी हामीले पराश्रव्य ध्वनिको तरङ्गलाई आफ्नो असक्षमताको कारण सुन्न नसके पनि यसको अस्तित्वलाई अस्वीकार पनि गर्न सक्दैनौं । ठीक त्यसै प्रकार ज्ञानको स्थिति, जुन उच्च कम्पनमा आधारित छ, लाई आफ्नो बुद्धिद्वारा नभई त्यसै उच्च कम्पनसित तद्रुप भएर बुझ्न सक्दछौं र यो तद्रुपावस्था त शरीर र मानसलाई साधनाद्वारा त्यति नै उच्च कम्पनमा अवस्थित गर्दा मात्र सम्भव हुन्छ । राजयोगले यस्तै अवस्थालाई प्रदान गर्दछ ।

**विवेचना :**

राजयोगका अध्येता स्वामी विवेकानन्दको यस विषयमा महत्त्वपूर्ण कथन पाइन्छ– प्रत्येक जीव अव्यक्त ब्रह्म हो, बाह्य एवं अन्तःप्रकृतिलाई वशीभूत गरेर आफ्नो यस ब्रह्मभावलाई व्यक्त गर्नु नै जीवनको चरम लक्ष्य हो । पूजा-उपासना, मनःसंयम अथवा ज्ञान, यीमध्ये एउटा वा धेरै अथवा सबै उपायहरूको सहयोग लिएर आफ्नो ब्रह्मभावलाई व्यक्त गरौं र मुक्त होऔं भन्ने कुरा धर्मको सर्वस्व हो । मत, अनुष्ठान, पद्धति, शास्त्र, मन्दिर अथवा बाह्य क्रियाकलाप त त्यसका गौण साधन मात्र हुन् ।

यस प्रकारको ओजस्वी वचन व्यक्त गर्ने उहाँले आफ्नो जीवनमा कुनै पद्धतिलाई आधार बनाउनुएको थियो भने त्यो राजयोग थियो । राजयोग एउटा यस्तो पद्धति हो जुन वास्तविक निदान प्रणाली हो, जसले मृगमरीचिकाबाट व्यक्तिलाई निकालेर अतृप्त जीवलाई वास्तविक अमृतको पान गराएर तृप्त गर्दछ । जुन ज्ञानको बोध व्यक्तिलाई समस्त शास्त्र, वेद, पुराण पढेर पनि प्राप्त हुँदैन, त्यस क्रियात्मक पक्षलाई जीवनमा उतारेर स्वामी विवेकानन्दले स्वदेशमा मात्र नभई विदेशमा समेत जसको परिचिय दिनुभयो, त्यो राजयोग नै थियो ।

राजयोग प्राणको नियन्त्रणको कला हो, ध्यानको गहिराइमा जाने कला हो, शरीर र मानसका समस्त अणुलाई नवीन ढङ्गबाट संयोजित गरेर आफ्नो शरीरमा नयाँ शरीरको रचना गर्नु हो ।

राजयोग जर्जर शरीरमा नयाँ आभामय र सुगन्धित शरीर दिने क्रिया मात्र होइन, जन्म-जन्मान्तरदेखि साथै आइरहेका समूल संस्कारहरूलाई उच्छेद गरेर एउटा नवीन जीवनरूपी शरीर प्रदान गर्ने अलौकिक प्रयास हो ।

जय गुरुदेव !

# समृद्धि र वैभवको प्राप्ति राजयोगबाट

राजयोग वास्तवमा जीवनको एउटा धारणा हो । राजयोगलाई कहिले योगसित जोडेर हेरिन्छ त कहिले श्वास-प्रश्वासको पद्धतिसित । राजयोगलाई लिएर जुन प्रकारको धारणा बने त्यसअनुसार प्राणायामका विभिन्न उपायहरूलाई गर्नु नै राजयोग मानिन थालियो । पातञ्जल योगसूत्रमा आधारित राजयोगमा त प्राणायामलाई अन्य उपायहरूका साथसाथै चित्त स्थिर गर्ने एउटा उपाय बताइएको पाइन्छ– प्रच्छर्दन विधारणाभ्यां वा प्राणस्य । अर्थात् प्राणवायु धारण गर्ने अथवा छोड्ने क्रियाबाट पनि चित्त स्थिर हुन्छ ।

सही अर्थमा सत्, रज र तम तीन गुणमध्ये सत्को साधना हो राजयोग । यसबाट जीवन वैभवशाली र समृद्ध बन्न सक्छ, ऐश्वर्यवान् र प्रभुताबाट भरिपूर्ण हुन सक्छ । जीवनमा धन-सम्पत्ति सहजै प्राप्त होस् र व्यक्ति जीवनमा गौरवान्वित पनि हुन सकोस् । यस्तो जीवन नै 'नृप'को हुन्छ र यही राजयोगको वास्तविक अर्थ हो ।

आजकालको सामाजिक परिवेशमा 'राजा' पदको कुनै परम्परागत अर्थ लिन सकिन्न । तर राजसी गुणको जुन तात्पर्य हो, त्यसअनुसार आजको समाजिक स्थितिमा यो भन्न सकिन्छ कि व्यक्तिको जीवन दबिएको, खुम्चिएको नभएर खुला, उदार र सामर्थ्यवान् होस्, उसमा कुनै प्रकारको पनि सङ्कीर्णता नहोस् । राजसी गुणको अर्थ दुई किसिमले लगाइँदै आइएको पाइन्छ– एक प्रकारको राजा जो अत्यन्तै वैभव र विलासका एकछत्र स्वामी हुन्थे, उसमा वीरता, उदात्तता, कल्याण गर्ने भावना, न्यायप्रियता हुनु पनि आवश्यक हुन्थ्यो । रजस गुण भनेको भोग विलासमा सीमित रहनु कदापि होइन ।

गहिराइसँग अर्थ बुझ्दा रजस गुणको बारेमा यो स्पष्ट हुन्छ कि रजस गुण जीवनको एउटा यस्तो गुण हो जुन कुनै पनि व्यक्तिमा प्रकट हुन सक्छ, प्रबल हुन सक्छ । यसका लागि व्यक्तिले कुनै विशेष गुण वा वैभवबाट सम्पन्न परिवारमा नै जन्म लिनु आवश्यक छैन । जुन व्यक्तिमा ऐश्वर्यलाई आर्जन गर्ने, त्यसलाई धारण गर्ने, दान र परोपकार गर्ने तथा जीवनमा सबै प्रकारका सुखलाई भोग्ने क्षमता हुन्छ, त्यो नै राजसी प्रवृत्तिको स्वामी हुन्छ । यस्तो पनि देख्न-सुन्नमा आउँछ कि कसैसँग धन त धेरै छ तर उसमा उदारतापूर्वक त्यस धनलाई कसैलाई दिने मनोवृत्ति हुँदैन र दिनै परे पनि मन मारेर दिन्छ । यो सङ्कीर्णता राजसी गुण हुन सक्दैन भलै व्यक्ति जत्ति नै 'श्री' सम्पन्न नै किन नहोओस् ।

राजसी गुणका लागि यो पनि आवश्यक हुँदैन– व्यक्तिको अनुहार, आकार-प्रकार र रङमा कुनै विलक्षणता होस् अथवा अद्भूत सौन्दर्य होस् । एउटा सामान्य मात्र होइन, अत्यन्तै सामान्य व्यक्ति पनि आफ्ना आन्तरिक गुणका कारण, रजोगुण प्रधान हुनाको कारण वर्चस्व स्थापित गर्न सक्दछ । अमेरिकाका राष्ट्रपति अब्राहम लिङ्कन एउटा सामान्य परिवारमा जन्मेका थिए । उहाँ कुरूप हुनाका साथै एउटा आँखा दोषयुक्त भएका र अलि खोच्याएर हिँड्ने राजनेता हुनुहुन्थ्यो तर देश नै उहाँमा मुग्ध थियो । आफ्नो अनुहार तथा शारीरिक अनाकर्षणको स्थानमा उहाँले आफ्नो रजोगुणलाई यति धेरै प्रबल गर्नुभयो जसबाट उहाँको वाणीमा ओज तथा तेज भरिन गयो । उहाँ देशका केवल राष्ट्रपति मात्र नभई एकछत्र नायक रहनुभयो । उहाँ सर्वाधिक लोकप्रिय राष्ट्रपति बन्न सफल हुनुभयो । भारतमा पनि लालबहादुर शास्त्रीले आफ्नो सानो उचाइका बावजूद राष्ट्रनायक बनेर रजोगुणको नै प्रतिष्ठा गर्नुभएको थियो ।

वाणी र अनुहारमा यस्तो प्रभाव जन्मजात पनि आउँछ र प्रयास गरेर पनि यस प्रकारको गुणलाई उत्पन्न गर्न सकिन्छ । रजोगुणको प्रधानताले गर्दा तेज र बल मात्र होइन, उदारता र कल्याणकारी प्रवृत्तिको पनि जन्म हुन्छ । यस प्रकारको व्यक्तिलाई जीवनमा न त कुनै अभाव हुन्छ, न उसलाई धनको नै चिन्ता गर्नुपर्ने हुन्छ । रजोगुण प्रधान व्यक्तिसँग लक्ष्मी आकर्षित हुनका लागि बाध्य हुनुहुन्छ किनकि रजोगुण वास्तवमा भगवान् श्रीविष्णुको नै स्वरूप हो । जुन व्यक्तिमा रजोगुण प्रबल हुन्छ, त्यो जति खर्च गर्दछ, त्यसको दुई गुणा उसको समीप स्वत: नै फर्केर आउँछ ।

एकजना गृहस्थ व्यक्ति पनि भगवान् श्रीविष्णुको समान जीवनमा पालन-पोषण र भरण-पोषणसँग नै सम्बन्धित हुन्छ । अत:व्यक्तिको लागि त यस्तो स्थिति हुनु आवश्यक मात्र होइन, अनिवार्य छ । यो विशेषता यदि जन्मजातरूपमा छैन भने यसलाई राजयोग दीक्षाद्वारा प्राप्त गर्न सकिन्छ । यस दीक्षाद्वारा स्वत: नै व्यक्तिको शरीरमा जडता समाप्त भएर यस्तो तेजस्विता र आकर्षित गर्ने क्षमता बढ्दछ कि अन्य व्यक्तिहरू उसप्रति खिचिएर आउन बाध्य हुन जान्छ । उसको वाणीमा ओज र आँखामा विशेष प्रकारको लपक आउन जान्छ कि उसले जसलाई एकटक हेर्दछ अथवा जोसँग एकछिन मात्रै कुरा गर्दछ त्यो स्वत: नै सम्मोहित हुन जान्छ । यसका लागि उसलाई सम्मोहन विद्याको आश्रय लिनु आवश्यक छैन । उसको यही गुण, व्यक्तित्वको तेजस्विता र लपक आजको आवश्यकता हो– केवल भौतिक सफलताका लागि मात्रै होइन, हरेक प्रकारका द्वन्द्व, तनाव र वैमनष्यताबाट बच्नका लागि पनि यसको आवश्यकता छ ।

यस्तो व्यक्ति नै राजयोगी कहलाइन्छ किनकि राजयोगी नै सबै प्रकारका भोगहरूका बीचमा रहेर पनि त्यसबाट अलिप्त रहन्छ । एकप्रकारले भन्ने हो भने उसको जीवन कमलसमान हुन्छ र कमल नै भगवती लक्ष्मीको निवासस्थान हो । यस्तो व्यक्तिसँग यदि भगवती लक्ष्मी पनि सम्मोहित हुनुहुन्छ भने आश्चर्य नै के रहन्छ ! जय गुरुदेव !

# राजयोगको सोपान

मानव स्वभावैले धेरै चञ्चल छ । यस चञ्चलतालाई शमन गरेर यसलाई कुन विधिले आफ्नो वशमा लिन सकिन्छ, कुन प्रकारले छरिएका शक्तिलाई केन्द्रीभूत गरेर सर्वोच्च लक्ष्यमा एकाग्र गर्न सकिन्छ, यही राजयोगको विषय हो ।

हठयोगको साधनाबाट जो साधक प्राणमाथि संयम गरेर आफूभित्रको प्रसुप्त अनन्त ज्ञान र शक्तिलाई जागरण गर्न इच्छुक छ, उसका लागि राजयोग नै सर्वश्रेष्ठ योग हो ।

**अन्तर्जगतमा मनोनिवेश**

बाह्यजगतका क्रियाकलाप मन स्थिर गर्नु अपेक्षाकृत एउटा सहज क्रिया हो, किनकि मानव मन प्राकृतिकरूपमा नै बहिर्मुखी छ । जबसम्म हामी आन्तरिक जगतको पर्यवेक्षण गर्दैनौं तबसम्म हामीले आफ्नो मनको सम्बन्धमा, आभ्यान्तरिक प्रकृतिको सम्बन्धमा, मानव विचारहरूको सम्बन्धमा केही पनि जान्न सक्दैनौं ।

मनलाई अन्तर्मुखी गर्नु, त्यसको बाह्य प्रकृतिलाई रोक्नु, त्यसको छरिएका शक्तिलाई केन्द्रित गरेर मनमाथि नै त्यसलाई प्रयुक्त गर्नु, जसबाट त्यो आफ्नो निरीक्षण गर्न सकोस्, आन्तरिक जगतमा परिभ्रमण गर्न सकोस्, यो एउटा अत्यन्तै दुष्कर कार्य हो । आजकालको शिक्षामा यस कुरालाई सिकाइने गरिएको छैन, आजभोलिको शिक्षाले बाह्यजगतमा विचरण मात्र गर्न सिकाउँछ ।

राजयोगले अन्तर्जगतको पर्यवेक्षण गर्न सिकाउँछ । मन नै त्यस आन्तरिक पर्यवेक्षणको यंत्र हो । यस मनले आफ्नो शक्तिलाई प्रकाश कीरणसमान यत्रतत्र छरेको छ । राजयोगको माध्यमबाट यी समस्त शक्तिलाई एकत्र गरेर मनमाथि नै यसको प्रयोग गर्नुछ । जुन प्रकारले सूर्यको प्रखर रश्मिसमक्ष घना अन्धकारको स्थान पनि प्रकट हुन जान्छ, त्यसै प्रकार एकाग्र मन आफ्ना सम्पूर्ण आन्तरिक रहस्यहरूलाई प्रकाशित गर्दछ र अन्तर्जगतका समस्त व्यापार हाम्रो ज्ञानचक्षुमा उद्भासित हुन जान्छ ।

**मन र शरीरको सम्बन्ध**

प्रकृतिको दैलो ढक्ढक्याउनका लागि के उपाय छ ? त्यसमा कस्तो आघात गर्नु पर्दछ ? यदि केवल यत्ति हामीलाई ज्ञान भइदिएको भए प्रकृतिले स्वयं आफ्नो रहस्य खोल्नुहुन्छ । यस आघातमा भक्ति र तीब्रता एकाग्रताबाट नै आउन सक्छ । मानव मनको शक्ति अपरिमित छ, तर त्यो जति धेरै एकाग्र हुन्छ त्यसको शक्ति त्यति नै मात्रामा आफ्नो लक्ष्यमा आघात गर्दछ ।

यो मन शरीरमा आश्रित छ । वस्तुत: हाम्रो मन शरीरको मात्र एउटा सूक्ष्म अवस्था हो, र मन एवं शरीर दुवै एक अर्कामा कार्यरत रहन्छ । प्रायश: हामी देख्छौं कि क्रोधावस्थामा मनको साथसाथै शरीर पनि अस्थिर हुन जान्छ, यसैप्रकार शरीर अस्वस्थ हुन जाँदा मन पनि रुग्ण हुन जान्छ । त्यसैले अधिकांश व्यक्तिहरूको मन उनीहरूको

शरीरको अधीन नै रहन्छ ।

अत: मनमाथि आधिपत्य स्थापित गर्नका लागि शरीरमाथि संयम राख्नु आवश्यक छ, जब शरीरमाथि हाम्रो अधिकार हुन जान्छ, मन पनि स्वत: नै केही अंशमा हाम्रो नियन्त्रणमा आउँछ । तब हामीले चित्तवृत्तिहरूलाई अन्तर्मुखी हुन प्रेरित गर्न सक्दछौँ ।

**प्रकृतिमाथि विजय**

यो सम्पूर्ण सृष्टि स्थूल र सूक्ष्म दुई भागमा विभक्त छन् । जे जति बाह्य जगतमा विद्यमान छन्, ती अन्तर्जगत वा सूक्ष्म जगतका स्थूल विकास मात्र हुन् । राजयोगको मतानुसार बाह्य जगत कार्य हो, अन्तर्जगत त्यसको कारण । यसप्रकार बाह्य जगतका सबै दृश्य शक्तिहरू आन्तरिक सूक्ष्मशक्तिहरूका नै स्थूल भाग हुन् । त्यसैले जसले आन्तरिक जगतको साक्षात्कार गरेर सूक्ष्म शक्तिलाई आफ्नो इच्छानुसार प्रयुक्त गर्न सिक्यो, त्यसले सम्पूर्ण प्रकृतिमाथि अधिकार जमाउन सक्छ ।

यस अवस्थामा पुगेका योगीहरूमा प्रकृतिको नियमको प्रभाव पर्दैन बरु तिनीहरू आन्तरिक एवं बाह्य दुवै प्रकृतिहरूमा आफ्नो आधिपत्य स्थापित गर्दछन् । राजयोगीको चेष्टा पनि यही हुन्छ, त्यो पहिले अन्तर्जगतको ज्ञान प्राप्त गरेर यसैको सहयोगले बाह्य एवं आन्तरिक उभय प्रकृतिलाई आफ्नो वशीभूत गर्दछ ।

**राजयोगको अङ्ग**

पतञ्जलिका अनुसार अष्टाङ्ग योगको पछिल्ला चार चरण राजयोगअन्तर्गत पर्दछन् जसलाई अन्तरङ्ग योग पनि भनिन्छ–

**१. प्रत्याहार**

**स्वविष्यासम्प्रयोगे चित्तस्वरूपानुकार इवेन्द्रियाणां प्रत्याहारः ।**

प्रत्याहारको तात्पर्य हो– खिँच्नु । मनको बाह्य गतिलाई रोकेर इन्द्रियको अधीनताबाट मनलाई मुक्त गरेर त्यसलाई अन्तर्जगततिर खिँच्नु प्रत्याहार हो ।

हाम्रो इन्द्रियहरूसमक्ष जेसुकै विषय आए पनि त्यससँग मन मिलेर त्यसैको रूप धारण गर्दछ । जब योगी इन्द्रियहरूलाई बाह्य वस्तुको रूप धारण गर्नबाट रोकेर त्यसलाई चित्तसँगै एक गर्दछ, तब ऊ जितेन्द्रिय कहलाइन्छ । सम्पूर्ण शरीर, समस्त भाव र सबै कार्यहरूमा त्यो जय प्राप्त गर्दछ ।

**२. धारणा**

**देशबन्धश्चित्तस्य धारणा । (योग पा० ३ सूत्र)**

अर्थात्, चित्तलाई कुनै विशेष वस्तुमा स्थिर गरेर राख्नुलाई धारणा भनिन्छ ।

धारणाको अभ्यासबाट व्यक्ति आफ्नो आत्मिक शक्तिलाई एकत्र गरेर त्यसलाई एउटा निश्चित लक्ष्यतिर प्रसारित गर्दछ । यो धारणा पनि अन्त: तथा बाह्य दुई प्रकारका हुन्छन् जसमा बाह्य धारणाका पनि पाँच

स्वरूप हुन्छन्–

क. जलीय– नदी, सरोवर वा समुद्रको तटमा बसेर शान्त जललाई स्थिर दृष्टिले हेर्ने प्रयत्न गर्नु,

ख. आग्नेय– दीपशिखा, मध्यम प्रकाशको चिम अथवा यज्ञको अग्निजस्तो तेजस पदार्थलाई स्थिर दृष्टिले हेर्ने प्रयत्न गर्ने,

ग. पार्थिव– कुनै पिण्ड, पुष्प, देवमूर्ति अथवा ॐ अक्षरलाई लक्ष्य गरेर दृष्टि स्थिर गर्नु,

घ. वायवीय– वायुको निरन्तर स्पर्श अथवा प्रश्वासको गतिको अनुभव गर्दै मनलाई स्थिर गर्ने प्रयत्न गर्नु,

ङ. शाब्दिक– मंत्र जपमा, जल निनादमा अथवा अनहदनादमा मनलाई बाँध्ने प्रयत्न गर्नु ।

धारणाको अन्तिम अवस्था नै ध्यानको प्रथम अवस्था हो । अत: ध्यानमा प्रवेश गर्नका लागि धारणा बलवान् हुनु आवश्यक छ ।

**३. ध्यान**

**तत्र प्रत्ययैकतानता ध्यानम् । (योग पा० ३, सूत्त २)**

धारणामा चित्त जुन ध्येयमा संलग्न हुन्छ, जब त्यो वृत्ति समान प्रवाहबाट उदय हुन्छ र कुनै दोस्रो विचार बीचमा आउँदैन, त्यसलाई ध्यान भनिन्छ । दोस्रो शब्दमा भन्नु पर्दा जुन बिन्दुमा ध्यान गरिन्छ त्यसैमा जब चित्त एकाग्र हुन्छ, त्यो नै ध्यानको स्थिति हो ।

**४. समाधि**

**तदेवार्थ मात्रनिर्भास स्वरूपशून्यमिव समाधि । (योग पा० ३, सूत्र ३)**

जब साधक आफ्नो लक्ष्य, इष्ट वा ध्येयका साथ एकाकार हुन जान्छ, जब उसलाई आफ्नो शरीरको पनि भान रहँदैन, त्यसलाई समाधि अवस्था भनिन्छ ।

वास्तवमा समाधि, चित्त र बुद्धि तत्त्वको यस्तो सूक्ष्म अवस्था हो जसले पदार्थको तत्त्वलाई विश्लेषण गरेर, त्यसको सूक्ष्म

स्वरूपको साक्षात्कार गराइदिन्छ, अतीन्द्रिय भावको दर्शन गराएर मोक्षको द्वारमा ल्याएर राखिदिन्छ ।

योगशास्त्रका अनुसार प्रकृतिका सबै पदार्थ र अवस्थाहरू त्रिगुणात्मक छन्, अत: समाधि पनि त्रिगुणात्मक हुन्छन् किनकि यो पनि त्रिगुणात्मक चित्त र बुद्धिको नै विशेष अवस्था हो । यसप्रकार समाधिका पनि तीन भेद छन्–

**१. तमःप्रधान समाधि**

यस समाधिमा तमसको प्रधानताको कारण शून्यको अतिरिक्त अन्य कुनै पनि भाव वा ज्ञानको स्मृति हुँदैन । तमोमयी अवस्थामा हुने अनुभूति निद्रावृत्तिसँग मिल्दोजुल्दो हुन्छ । नियमित अभ्यासबाट तथा आत्मचिन्तनबाट प्रबल भएमा बिस्तारै-बिस्तारै सत्व गुणको प्रधानता बढ्न जान्छ र शेष दुई गुण पनि न्यून मात्रामा विद्यमान रहन जान्छन् ।

**२. रजःप्रधान समाधि**

यसमा रजस गुणको प्रधानता रहन्छ । यसमा पनि सर्वप्रथम सविकल्प समाधिको अवस्था आउँछ जुन स्थूल पदार्थहरूका स्थूल रूपहरूलाई स्थूलरूपमा दर्शाउने समाधि लाग्दछ । तत्पश्चात् त्यस स्थूल पदार्थको सूक्ष्म र अतीन्द्रिय तत्त्वको दर्शन हुन्छ जसलाई सविचार समाधि पनि भनिन्छ । यस अवस्थामा प्रत्येक वस्तु आफ्नो दिव्य स्वरूपलाई प्रकट गर्न लाग्दछन् ।

**३. सत्व प्रधान समाधि**

यसमा रजोगुणको तीब्रता मेटिएर सत्व प्रधान अवस्था आउँछ र सत्वको प्रकाशमा नै वस्तु मात्र प्रकाशित हुन्छ । निर्विचार समाधि सत्व प्रधान समाधि हो जसमा ग्राह्य र ग्रहणको सूक्ष्मरूपमा समाधिको समय शब्द, अर्थ र ज्ञानको विकल्प रहँदैन । निर्विचारको एउटा अवस्था विशेष नै आनन्दानुगत समाधि हो जसमा आनन्दको अनुभव र अहं ब्रह्मास्मिको बोध हुन जान्छ ।

यी सबै समाधिहरू सबीज कहलाइन्छन् किनकि यी सबै अवस्थाहरूमा चित्त कुनै न कुनै वस्तु 'स्थूल वा सूक्ष्म'को आधार लिएर रहन्छ जसको कारण समस्त वृत्तिहरूको निरोध हुन पाउँदैन ।

**४. असम्प्रज्ञात समाधि**

यो अन्तिम अवस्था हो जसमा सबै वृत्तिहरूको निरोध भएर संस्कार मात्र शेष रहन जान्छ । परम वैराग्यद्वारा नै असम्प्रज्ञात समाधिमा संस्कारहरूको पनि निरोध हुन जान्छ र आत्माको स्वरूपस्थिति प्राप्त हुन जान्छ । जय गुरुदेव !

*(मंत्र तंत्र यंत्र विज्ञान, नोभेम्बर १९९४ बाट साभार)*

# राजयोग तथा मग्नमय स्थिति

ब्रह्माकुमार रामसिंह ऐर

साधना कष्ट र पीडाजनक नहोस् । साधनाका नाममा शारीरिक पीडा र यातना चित्तबुभ्दो हुँदैन र यो अस्वाभाविकजस्तो पनि लाग्ने हुन्छ । परमात्माको सुन्दर रचना यस शरीरका प्रत्येक अंग-प्रत्यंगको आफ्नै महत्त्व र आवश्यकता छ । स्वाभाविकरूपमाश यिनीहरूले गर्ने कार्यमा अवरोध गर्नु सुखदायक हुँदैन । हठ क्रियाद्वारा तिनीहरूलाई दमन (Supress) गर्नु उचित हुँदैन । साधनाले त अझ शरीरका सबै अंग-प्रत्यंगका तथा सबै Auto प्रणालीलाई व्यवस्थित ढंगले संचालन र कार्य गर्नमा सहयोग पुऱ्याउनु पर्ने हो । यदि त्यसको सट्टा यी सबै प्रणालीमा दोष देखा पर्दछ भने त्यसलाई सही साधनाका रूपमा ग्रहण गर्न वा स्वीकार्न सकिँदैन र यो अज्ञानतापूर्वक हठ र बलजफ्स्ती गरिएको मानिनेछ । यस प्रकारले बलपूर्वक गरिएको कुनै पनि क्रिया, कर्मले अन्ततः मानिसलाई सुखको सट्टा कष्ट र आरोग्यको सट्टा वेचैनी प्रदान गर्दछ ।

प्राचीनकालदेखि प्रसिद्ध र लोकप्रिय सहज राजयोग पद्धतिमा हठक्रिया कतै पनि छैन । यद्यपि यस साधनामा साधकले अत्यन्तै उच्च धारणा, संयम, अनुशासन र मर्यादाको पालन गर्नुपर्दछ । तर ती नियम, सिद्धान्त आजका मानिसहरू अज्ञानवश अनावश्यक ठान्दछन् । सत्य ज्ञानको यथार्थ बोधबाट मानिस ती साधनाका यम-नियमलाई स्वस्फूर्तरूपमा धारण गर्न लालायित, आतुर हुन्छ । उसको मन, हृदयले ती उच्च धारणालाई सहज परिपालन गर्दछ । यसमा उसलाई न शारीरिक कष्ट हुन्छ, न त मानसिक तनाव नै । अझ बाहिरी र भित्रीरूपमा सहज र सुखद स्थितिको अनुभव हुन्छ । यस धारणाबाट उसको शरीरमा पनि कुनै प्रकारको दोष देखा पर्दैन । अझ तिनीहरूको संचालनमा सुविधाजनक स्थितिको अनुभव हुन्छ । त्यस्तै मानसिकरूपमा पनि खुशी, आनन्द र शान्तिको अनुभूति हुन्छ । राजयोग साधनामा कुनै पनि प्रकारको कर्मकाण्ड, रीति-रिवाजले प्रोत्साहन पाएको हुँदैन । साधना गर्न विविध सामग्री र कर्मकाण्डी विधिको यसमा स्थान हुँदैन । राजयोग साधनाको विशिष्टतम् सत्य ज्ञानको स्पष्ट समझ र त्यसलाई चिन्तन र व्यवहारमा ल्याउनमा नै हुन्छ किनकि यस अभ्यासमा व्यक्ति प्रथमतः आफ्नै आन्तरिक आत्मस्वरुपमा स्थित हुन्छ अर्थात् अन्तर्मुखी बनेर स्वदर्शन र स्वचिन्तनमा मस्त हुन्छ । देहाभिमानभन्दा माथि उठेर आत्माभिमानी स्थितिलाई प्राप्त गर्दछ । त्यसपछि परमसुख, शान्ति र आनन्दको दाता परमात्माको प्रेम विभोरको स्मृतिमा तल्लीन र तन्मय हुन्छ । राजयोगमा एकाग्रताको केन्द्रविन्दु कुनै व्यक्ति, वस्तु-वैभव नभएर सर्वशक्तिमान, सबै प्रकारका इच्छा र आकांक्षालाई भरिपूर्ण र पूर्ण गरिदिने परमात्मासँग रहन्छ । यसमा मन र बुद्धि तथा ज्ञान, चिन्तनको नै महत्त्वपूर्ण भूमिका हुन्छ किनकि परमेश्वर परमात्मा परमज्योतिस्वरूप शिवलाई मन्मनाभवको मन्त्रले नै याद गर्न सकिन्छ । यसमा न त तन तनाभवको स्थान छ, न त धनधनाभवको नै । परमात्मालाई हाम्रो निश्चल, निष्कपट, खुला र शुद्ध हृदयको खाँचो पर्दछ । यसमा प्रभु राजी हुनुहुन्छ । सच्चा हृदयमाथि प्रभु राजी भने झैँ शुद्ध भावना र हृदयको आवाज नै परमात्मासँग एकाग्र र एकात्मक हुन सफल हुन्छ । यो कुरा राजयोगबाट सहजै प्राप्त हुन्छ । अर्थात् राजयोग साधनामा यिनै अभ्यास र चिन्तनलाई आत्मसात् गरी व्यवहारमा ल्याउने गरिन्छ ।

राजयोग साधनामा मानिसले निर्बोझ, निर्विकल्प र निभर्य मनस्थितिको अनुभव गर्दछ । साथै बुद्धिमा दिव्यता र संस्कारमा समेत शीतलता र शुद्धता हुँदै जान्छ । यस प्रकार आन्तरिक मन, चित्त, संस्कारको शुद्धिको मात्रा अभ्यासका अनुपातमा दिन प्रतिदिन वृद्धि हुँदै जान्छ । फलस्वरूप राजयोग साधकको स्थिति अत्यन्तै मग्न, मस्तको रहन्छ । यसमा परीक्षाका रूपमा जस्तोसुकै विघ्न-बाधा आए पनि पक्का राजयोगीको महान् उद्देश्य प्राप्तिको यात्रालाई रोक्न र छेक्न सक्दैन किनकि राजयोग साधनाको सूक्ष्म यात्रामा मायाको विघ्न पनि सूक्ष्म मनमा नै पर्ने गर्दछ । संकल्प-विकल्पको हुरी, निराशा र हतासको मनस्थिति वा शंका र उपशंका, आन्तरिक द्वन्द्व उत्पन्न भई यस सुन्दर यात्रालाई डामाडोल गर्न सक्दछ । तसर्थ, राजयोगको आन्तरिक उडानमा सफल हुन राजयोगीले आफ्ना सूक्ष्म संकल्प र मनस्थितिलाई आरम्भमा नै निरीक्षण गरी परिवर्तन गरेमा सहज सफलता प्राप्त हुन जान्छ तथा राजयोग साधनाको उच्चतम शिखरको प्राप्ति मग्नमय अवस्था जमाउन वा बनाउन सकिन्छ । यस लग्नको अग्निमा कुनै प्रकारका बाधा, विघ्न स्वाहा हुन्छन् अर्थात् जलेर भस्म हुन्छन् । राजयोग साधनाबाट प्राप्त हुने आन्तरिक आध्यात्मिक ऊर्जाका सामु विघ्न, बाधा र विकारी भावनाहरू टिक्न सक्तैनन्, आफै चकनाचुर भएर जान्छन् । मानिस अत्यन्तै साहसी, निर्भय र निश्चिन्त बन्न पुग्दछ । जहाँ मानिसमा आन्तरिक साहस हुन्छ, निर्भय र निश्चिन्त अवस्था हुन्छ त्यहाँ शान्ति र अमन, चैनको स्थिति हुन्छ । भय र त्रासका बीच सुख र चैन हुन सक्तैन । मानिस जतिसुकै सुख-सुविधाका साधनले

**राजयोगमा एकाग्रताको केन्द्रविन्दु कुनै व्यक्ति, वस्तु-वैभव नभएर सर्वशक्तिमान, सबै प्रकारका इच्छा र आकांक्षालाई भरिपूर्ण र पूर्ण गरिदिने परमात्मासँग रहन्छ । यसमा मन र बुद्धि तथा ज्ञान, चिन्तनको नै महत्त्वपूर्ण भूमिका हुन्छ किनकि परमेश्वर परमात्मा परमज्योतिस्वरूप शिवलाई मन्मनाभवको मन्त्रले नै याद गर्न सकिन्छ । यसमा न त तन तनाभवको स्थान छ, न त धनधनाभवको नै । परमात्मालाई हाम्रो निश्चल, निष्कपट, खुला र शुद्ध हृदयको खाँचो पर्दछ । यसमा प्रभु राजी हुनुहुन्छ । सच्चा हृदयमाथि प्रभु राजी भने झैं शुद्ध भावना र हृदयको आवाज नै परमात्मासँग एकाग्र र एकात्मक हुन सफल हुन्छ । यो कुरा राजयोगबाट सहजै प्राप्त हुन्छ ।**

सम्पन्न भएता पनि आन्तरिकरुपमा बढी चिन्तित छ वा भय र त्रासमा छ भने सबै सुख, सुविधाका साधन फिका र स्वादहीन हुन्छन्, तिनीहरूको सुखद उपभोग गर्न सक्तैन । त्यस्तै, इच्छा, आकांक्षा र कामनाको असीमित दौडमा मानिसले तृप्ति र सन्तोषको सास फेर्न सक्तैन । कहिले पनि पूर्ण नहुने सांसारिक र क्षणिक ईच्छाको पछि लिप्त हुने मानिसले पनि जीवनमा सही तृप्ति र सन्तोषको अनुभव गर्न सक्तैन । त्यस्तो व्यक्तिलाई 'चाहियो फेरि चाहियो'को रोगले ग्रस्त गरेको हुन्छ र उसका लागि मग्नमय सुखद स्थिति टाढाको स्वप्न बन्न पुग्दछ । राजयोग साधनामा मानिसले प्रभु मिलनबाट यस्तो अलौकिक र स्थायी अतीन्द्रिय सुख प्राप्त गर्दछ कि उसका लागि सांसारिक इच्छा, आकांक्षा मृगतृष्णा समान बन्छ । मनको एकाग्रता र मन्मनाभवको निरन्तर अभ्यासमा ऊ यति मस्त रहन्छ कि जसलाई 'मौलाई मस्ती'को नामले पनि जान्न सकिन्छ । उसका आन्तरिक सबै प्रकारका चाहना यसबाट पूर्णरूपले पूर्ण हुन्छ। उसको मनमा यही गीतको ध्वनि गुन्जायमान हुन्छ कि जो पाउनु थियो, त्यो पाई हाँले, अब के नै बाँकी रह्यो र ! मनका सम्पूर्ण आकांक्षाहरू तृप्त भएका छन् । प्रभु प्रेम र शक्तिको निरन्तर वर्षाले सिंचित मनस्थिति भोग, वासना, कामनाबाट पूर्णतः माथि उठेको वा निर्लिप्त रहने गर्दछ । यो कुरा वास्तवमा राजयोगबाट नै प्राप्त हुन्छ ।

साँच्चै भन्नु पर्दा मानिसले जीवनमा चाहेको सच्चा र परमसुख र शान्तिको प्राप्ति राजयोग साधनाबाट प्राप्त हुन सक्दछ । यसका लागि कुनै शरीरलाई कष्ट पुग्ने खालको मेहनत पनि गर्नु पर्दैन, कुनै धन-सम्पत्ति पनि व्यय गर्नु पर्दैन र कुनै लामा-लामा उपासना र कर्मकाण्डका रीति-रिवाजको पनि घनचक्करमा पर्नु पर्दैन । बरु, यस साधनामा प्रभुमाथि पूर्ण विश्वास, आस्था, श्रद्धा र दृढ निश्चय गरी मन-बुद्धिबाट समर्पण हुनु जरूरी हुन्छ । यसमा कुनै तर्क-वितर्कभन्दा पनि परमात्माको श्रीमतलाई सर्वकल्याण, समुत्थानको वरदान सम्झी परिपालन गर्नु पर्दछ । यस्तो गर्नाले नै मानिस निश्चिन्त, निर्विकल्प बनी ईश्वरको पूर्ण प्रेम, शक्तिको वर्षाबाट स्वयंलाई आलोकित गरी मग्नमय स्थितिमा स्थायीरूपमा स्थित हुन सक्दछ तथा जीवनरूपी प्रभु देनको वास्तविक रस्वास्वादन गर्न सकिन्छ ।

# परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज डा. नारायणदत्त श्रीमाली स्वरूपमा

जब-जब धर्तीमा अन्याय र अत्याचारले सीमा नाघ्छ, तब-तब विभिन्न दिव्यात्माहरूको अवतरण हुने गर्दछ । यसै शृंखलामा २१ अप्रिल सन् १९३३ मा यस धर्तीमा एक अद्वितीय महापुरुषको जन्म भएको थियो जसलाई लौकिकरूपमा हामी डा. नारायण दत्त श्रीमालीको रूपमा चिन्दछौं ।

यस विश्व ब्रह्माण्डमा हुने आध्यात्मिक क्रियाकलापहरूलाई प्रत्यक्षरूपमा सञ्चालन गर्ने दिव्यस्थलको नाम नै सिद्धाश्रम हो जुन मानव जीवनको अन्तिम लक्ष्य हो । यसका सञ्चालक स्वामी सच्चिदानन्द महाराजका अत्यन्त प्रियतम शिष्य, सर्वज्ञाता महायोगी परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ । दादा गुरुदेव स्वामी सच्चिदानन्द महाराजको आज्ञालाई शिरोधार्य गर्दै भारतको राजस्थान प्रान्तमा परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीको रूपमा जन्म लिई विश्वमा सुविख्यात् हुनुभएको हो ।

बुबा पं. मुल्तानचन्द श्रीमाली र आमा रूपादेवी श्रीमालीको कोखबाट जन्मनुभएका परमपूज्य सद्गुरुदेव सानैदेखि असाधारण प्रतिभा एवं अद्वितीय व्यक्तित्वका धनी हुनुहुन्थ्यो । उहाँको जन्म अगाडि नै विभिन्न दिव्य सङ्केतहरू प्राप्त गर्नुभएका उहाँका माता-पिताले सङ्केतहरूकै आधारमा नाम पनि नारायण नै राख्नुभएको थियो । उहाँ सानै उमेरदेखि अद्भुत बाललीलाहरू देखाउँदै अध्ययनतिर उन्मुख हुनुभयो र किशोरावस्थामा भगवती देवीसँग वैवाहिक सूत्रमा बाँधिनुभयो । त्यसपछि उहाँले कैयौँ वर्ष नेपाल, भारत, तिब्बत आदि क्षेत्रका हिमाल एवं पहाडका गुफाहरूमा आफ्नो संन्यास जीवन बिताउनुभयो । यसै क्रममा उहाँले संन्यास जीवनका थुप्रै विकृति एवं पाखण्डलाई हटाउँदै संन्यासीहरूबीच आपसी सम्बन्धलाई बलियो बनाई दिव्य ज्ञानको सन्देश दिनुभयो ।

संन्यास जीवनपश्चात् गृहस्थ जीवनमा फर्केपछि परमपूज्य सद्गुरुदेवले ज्योतिष विज्ञानलाई अङ्गालनुभयो । ज्योतिष क्षेत्रमा अत्यधिक खोज, अनुसन्धान गरी सर्वसाधारणले बुझ्ने गरी यसलाई सहज र सरल पार्नुभयो । साथै ज्योतिषसम्बन्धी एक सय जति ग्रन्थहरू रचना गरी ज्योतिष क्षेत्रलाई पूर्णताका साथ स्थापना गर्नुभयो । विश्वका सर्वश्रेष्ठ ज्योतिषी पदले विभूषित परमपूज्य सद्गुरुदेव भारतको राजधानी दिल्लीमा सन् १९७९ मा आयोजित ६४ देशहरूको सहभागितामा भएको 'विश्व ज्योतिष सम्मेलन'मा अध्यक्ष पदमा सुशोभित हुनुभएको थियो ।

अत्यन्त रहस्यमय र महत्त्वपूर्ण विधा मन्त्र-तन्त्रलाई उहाँले पहिलोपल्ट सर्वसाधारणसमक्ष ल्याउनुभयो । यसका सैद्धान्तिक एवं व्यावहारिक पक्षहरूको वैज्ञानिक विश्लेषण गरी जगत्‌लाई मन्त्र-तन्त्रसँग परिचित गराई यिनीहरूको माध्यमबाट हर मानवीय समस्याको समाधान गर्न सकिने सत्य-तथ्यलाई उजागर गर्नुभयो । मन्त्र-तन्त्रप्रति रहेका नराम्रा दृष्टिकोणहरूलाई हटाई मन्त्र साधना, तन्त्र साधनाका क्लिष्टता र जटिलतालाई परिमार्जित गर्नुभयो भने यस विद्यालाई सर्वसुलभ बनाई यससम्बन्धी सम्पूर्ण आवश्यक मार्गनिर्देशन प्रदान गरी यी विद्याहरू मानव कल्याणकारी भएको कुरा प्रमाणित गर्नुभयो । मन्त्र-तन्त्रसम्बन्धी थुप्रै ग्रन्थका रचयिता परमपूज्य सद्गुरुदेव मन्त्र क्षेत्रका अद्वितीय व्यक्तित्व, मन्त्र स्रष्टा, मन्त्र शिरोमणि आदि पदले विभूषित हुनुहुन्छ । ५७ भन्दा बढी तान्त्रिक सम्मेलनहरूको अध्यक्षता गर्नुभएका परमपूज्य सद्गुरुदेव तन्त्र क्षेत्रका अन्तिम नाम, अद्वितीय तान्त्रिकको रूपमा विश्वविख्यात् हुनुहुन्छ ।

आधुनिक सम्मोहन क्षेत्रका सर्वश्रेष्ठ सम्मोहनकर्ताको रूपमा परिचित परमपूज्य सद्गुरुदेवले यस क्षेत्रसम्बन्धी पनि थुप्रै अनमोल ग्रन्थ लेख्नुभएको छ जसलाई अध्ययन गरी साधारण व्यक्तिले पनि यससम्बन्धी व्यावहारिक ज्ञान हासिल गर्न सक्दछ । आफ्नो अवतरण कालमा सम्मोहनको माध्यमले उहाँले हजारौँका रोग, समस्याहरू समाधान गरी यस विज्ञानका गूढतम रहस्यहरूलाई सबैका सामु ल्याउनुभएको छ ।

परमपूज्य सद्गुरुदेव प्रत्येक क्षेत्रमा, प्रत्येक विषयमा पारंगत हुनुहुन्छ, उहाँको महानता, उच्चता अवर्णनीय छ । आयुर्वेदिक क्षेत्रमा त परमपूज्य सद्गुरुदेव स्वयं धन्वन्तरी हुनुहुन्थ्यो । मन्त्र-तन्त्र, सम्मोहनजस्ता क्षेत्रभन्दा कैयौँ गुना उहाँ सफल आयुर्वेदज्ञ हुनुहुन्थ्यो । एक मुठी सास रहँदासम्म पनि जो गुरुदेवकहाँ पुग्दथ्यो, उसले पुनर्जीवन प्राप्त गर्दथ्यो ।

यस्तै सूर्य विज्ञान, रसायन विज्ञान, सामुद्रिक विज्ञान, ध्यान, योग, कला, साहित्य, सङ्गीत, पराविज्ञान, क्रियायोग, कुण्डलिनी आदि गूढतम विधाहरूका ज्ञाता परमपूज्य सद्गुरुदेवलाई सारा शास्त्रहरू कण्ठस्थ थिए । मन्त्र-तन्त्रप्रति व्याप्त भएका विभिन्न शंका उपशंकाका जालोहरू हटाउँदै, मन्त्र-तन्त्र एवं हाम्रा प्राचीन विद्याहरूलाई पूर्ण जीवन्त गर्न परमपूज्य सद्गुरुदेवले 'मन्त्र-तन्त्र-यन्त्र विज्ञान' पत्रिकाको मासिक प्रकाशन गर्नुभएको थियो जुन हालसम्म प्रकाशमा आइरहेको छ ।

विभिन्न संघ-संस्थाहरूले परमपूज्य सद्गुरुदेवको अद्वितीय व्यक्तित्वको आ-आफ्नै स्तरअनुसार कदर र सम्मान गरी आफ्ना भावना व्यक्त गरेको पाइन्छ । सन् १९८२ मा. भारतीय राष्ट्रपति डा. वि.डी. ले 'महामहोपाध्याय', सन् १९८८ मा मन्त्र संस्थान, उज्जैनले उहाँलाई मन्त्र शिरोमणिको रूपमा विभूषित गरी पदवी दिएको थियो । त्यस्तै, तत्कालीन उप-राष्ट्रपति डा. शंकरदयाल शर्माले १९८९ मा 'समाज शिरोमणि'को राष्ट्रिय पदक एवं सन् १९९२ मा मरिससका प्रधानमन्त्री सर जगन्नाथ अनिरुद्रले उहाँलाई 'जगद्गुरु'को संज्ञाले विशेष अभिनन्दन गर्नुभएको थियो । यस्ता विभूषण र पद्वी थुप्रै संघ-संस्थाले दिएर कदर गरे पनि एउटा युगपुरुषको परिचय यी विभूषणले कदापि गर्न सक्दैनन् ।

आफ्नो अवतरण कालमा थुप्रै ग्रन्थ लेखेर, थुप्रै साधना शिविरहरू देश विदेशमा सम्पन्न गराई उहाँले आध्यात्मिक विधाहरूलाई सर्वसाधारणको हातमा थमाइदिनुभएको छ जसले गर्दा यो धर्तीमा आज पुन: एकपल्ट यी विद्याहरू लहराउन थालेका छन् । उहाँले आगामी युग 'आध्यात्मिक युग' हुने कुराको शङ्खघोष गर्नुभएको छ । यसको लागि सम्पूर्ण आवश्यक वातावरण तयार पारी बाँकी कार्य आफ्ना शिष्यहरूलाई जिम्मा लगाई परमपूज्य सद्गुरुदेवले ३ जुलाई, १९९८ मा महाप्रयाण लिनुभयो ।

परमपूज्य सद्गुरुदेवको सूक्ष्म निर्देशनमा स्थापित काठमाडौँको पुरानो बानेश्वरस्थित सिद्धाश्रम शक्ति केन्द्र उहाँकै आध्यात्मिक युग निर्माणको महान् योजनामा अग्रणी भूमिका निर्वाह गर्दै अगाडि बढिरहेको छ । **जय गुरुदेव** !

## नेपाल र नेपालीका गर्वका प्रतिमूर्ति

# श्री श्री महायोगी गुरु गोरखनाथ

श्री श्री महायोगी गुरु गोरखनाथ अजर, अमर, अनादि हुनुहुन्छ । योगसिद्ध, अमरकाया प्राप्त महायोगी सांसारिक बन्धनहरूभन्दा माथि, जन्ममृत्युको चक्रबाट मुक्त कालातीत व्यक्तित्व हुनुहुन्छ । उहाँलाई गुरुहरूमा महागुरु, योगीहरूमा महायोगी एवं नाथहरूमा महानाथको रूपमा आदर, सम्मान र पूजन गरिन्छ । आजको समाजले उहाँको महानता र उच्चतालाई बुझ्न सकिरहेको छैन । समयचक्रसँगै आजको समाजमा कैयौं व्यक्तिहरूले महायोगी गुरु गोरखनाथलाई एउटा सामान्य योगीको रूपमा मात्र हेर्ने गरेको पाइन्छ ।

महायोगी गुरु गोरखनाथसम्बन्धी सत्यतथ्य कुराहरूबाट अधिकांश व्यक्ति अनभिज्ञ छन् । उहाँको जन्मतिथि, मिति, जन्मस्थान, मातापिता आदिबारे वास्तविकरूपमा हालसम्म कुनै इतिहासकार, विद्वान्, लेखक, योगी, स्वामी कसैले पनि किटान गरेर कहीं, कतै उल्लेख गरेको पाइँदैन । यस कुरामा भने सबै लेखकहरू सहमत भएको पाइन्छ कि उहाँको प्रकटीकरण आमाको गर्भबाट नभई पृथ्वीमाताको गर्भबाट भएको हो ।

भगवान् शिवका १०८ अवतारहरूमा सर्वाधिक महत्त्वपूर्ण अवतारको रूपमा पनि महायोगी गुरु गोरखनाथलाई मानी आदर-सम्मान गर्ने र उहाँलाई शिव गोरक्षको रूपमा सर्वत्र पूजन गर्ने गरिएको पाइन्छ । सम्पूर्ण सिद्धि, शक्तिका स्वामी, अमरकाया प्राप्त भगवान् शिव गोरक्षले आफ्नो इच्छानुसार प्रकट भई सबैको कल्याण गर्नुभएका, सामाजिक उत्थान गरी स्पष्ट मार्गनिर्देशन गर्नुभएका थुप्रै घटनाका कारण पनि उहाँसम्बन्धी विभिन्न रहस्यमय एवं विवादास्पद कुराहरूसमेत रहेको पाइन्छ । इच्छा लागेको स्थानमा महायोगी प्रकट हुनुहुने हुनाले उक्त स्थानविशेषका मानिसहरूले उहाँ प्रकट हुनुभएको समयलाई मूल मानी उहाँको उत्पत्ति त्यहींबाट भएको भनी बढी प्रचार-प्रसार गरेको पाइन्छ ।

उहाँ प्रकट हुनुभएको स्थान र समयलाई मूल आधार मानी इतिहास बनाउँदा अपूरो र अधूरो हुन गयो । उहाँ जहाँ प्रकट हुनुहुन्थ्यो, उहाँका भौतिक चमत्कारी गोरक्ष लीलाहरूले त्यस क्षेत्रको पूरै जनजीवन पूर्णरूपले प्रभावित हुन्थ्यो । सारा व्यक्तिहरूका आस्था, विश्वास एवं श्रद्धाको केन्द्र बन्नुभएका महायोगीका अद्वितीय योगदान एवं अवर्णनीय कार्यहरू स्वर्णिम इतिहास बन्दै आज पनि सबैका लागि अनुकरणीय छन् । महायोगीको उत्पत्ति प्रथमपटक गोरखास्थित गोरष गुफाबाट भएको थियो अर्थात् महायोगी गुरु गोरखनाथ

**उहाँ चारै युगमा सशरीर हुनुहुन्छ भन्ने विश्वास गरिन्छ । विदेशी लेखक ब्रिग्सले 'गोरखनाथ एण्ड द कानफट्टा योगी'मा गुरु गोरखनाथ विभिन्न युगमा, विभिन्न ठाउँमा, विभिन्न स्वरूपमा प्रकट हुनुभएको कुराको उल्लेख गर्नुभएको छ जसअनुसार सत्ययुगमा लाहोरनजिक पेशावरमा, त्रेतायुगमा गोरखपुरदेखि उत्तर-पश्चिम गोरखमण्डीमा भएको कुराको उल्लेख पाइन्छ । यसरी महायोगी गुरु गोरखनाथले प्रत्येक युगमा प्रकट भई आध्यात्मिक युग स्थापनाका लागि अद्वितीय योगदान गर्नुभएको कुराको उल्लेख पाइन्छ ।**

प्रथमपटक यस धरामा गोरष गुफामा प्रकट हुनुभएको थियो । उहाँ चारै युगमा सशरीर हुनुहुन्छ भन्ने विश्वास गरिन्छ । विदेशी लेखक व्रिग्सले 'गोरखनाथ एण्ड द कानफट्टा योगी'मा गुरु गोरखनाथ विभिन्न युगमा, विभिन्न ठाउँमा, विभिन्न स्वरूपमा प्रकट हुनुभएको कुराको उल्लेख गर्नुभएको छ जसअनुसार सत्ययुगमा लाहोरनजिक पेशावरमा, त्रेतायुगमा गोरखपुरदेखि उत्तर-पश्चिम गोरखमण्डीमा भएको कुराको उल्लेख पाइन्छ । यसरी महायोगी गुरु गोरखनाथले प्रत्येक युगमा प्रकट भई आध्यात्मिक युग स्थापनाका लागि अद्वितीय योगदान गर्नुभएको कुराको उल्लेख पाइन्छ ।

हालको पाकिस्तानमा पर्ने रावलपिण्डीमा १० देखि १२ औं शताब्दीमा उहाँ प्रकट हुनुभएको कुरालाई भारतीय विद्वान्, लेखकहरूले विशेषरूपमा वर्णन गरेको पाइन्छ । त्यस्तै, नेपालमा राजा नरेन्द्रदेवको पालामा उहाँ नागको आसन जमाई तपस्यारत हुनुहुँदा १२ वर्षसम्म पानी नपरेको घटना पाइन्छ भने १६ औं शताब्दीमा पनि द्रव्य शाहदेखि लिएर पृथ्वीनारायण शाहसम्मलाई उहाँको आशीर्वाद, अनुकम्पा एवं कृपा प्राप्त भएको र यसबाट नै शाहवंशीय राजाहरूको गौरवशाली शृंखला शुरुआत भएको पाइन्छ । त्यसैले महायोगी गुरु गोरखनाथलाई शाहवंशीय राजाहरूका कुलगुरु, नेपालीहरूका कुलदेवता, इष्ट देवता र नेपालका राष्ट्रगुरुको रूपमा आदर-सम्मान गर्ने गरिन्छ ।

विश्वमै वीर गोर्खालीको रूपमा पहिचान दिलाउने महायोगीलाई अधिकतम मानिसले बिर्सिसकेको वर्तमान परिप्रेक्ष्यमा सिद्धाश्रम शक्ति केन्द्रले श्री श्री महायोगी गुरु गोरखनाथलाई गुरुरूपमा आत्मसात् गरी उहाँको सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक जागरणको महान् अभियानमा अगाडि बढ्दै, समस्त विश्वलाई नै उहाँको वास्तविकता बुझाउँदै सम्पूर्ण मानवको आध्यात्मिक उन्नतिको लागि लागिपरेको छ ।

उहाँसम्बन्धी सत्य-तथ्य कुरा जानकारीमा ल्याउँदै पुनः उहाँको सान्निध्य, कृपा र आशीर्वाद सबैका लागि सुलभ गराइरहेको यो आश्रम महायोगी गुरु गोरखनाथको सर्वोच्चतासँग पुनः जगत्‌लाई परिचित गराउने कोशिशमा व्यस्त छ । हर आध्यात्मिक युगको प्रतिस्थापनामा गोरक्ष शक्ति सक्रिय रहेको हुन्छ । तसर्थ, आगामी गोरक्ष निखिल युगको प्रादुर्भावको लागि प्रत्येक मानवको कल्याणका लागि सद्‌गुरुदेवको अनुकम्पा अत्यावश्यक छ । उहाँको प्रत्यक्ष निर्देशन प्राप्त संस्थाबाट नै उहाँको शक्ति विष्फोट हुने कुरा सुनिश्चित छ । यसैले, यस भूलोककै अद्वितीय आश्रम सिद्धाश्रम शक्ति केन्द्रमा आई एकपल्ट सबै कुरा बुझ्नु आफ्नै दायित्व हुन्छ । जय गुरुदेव !

नववर्ष २०६५ को उपलक्ष्यमा
समस्त साधक-साधिका एवं देशवासीहरूमा
सद्गुरूदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वाद
प्राप्त भइरहोस् भनी प्रार्थना गर्दछौं ।

**आमा चामुण्डा गर्ल्स होस्टेल**

कृष्णधारा मार्ग,महाराजगञ्ज, काठमाडौं, फोन नं. ४४१००६६,
मोबाइल ९८४१६२२६६७/९८४१७५७३८९
(way to police hospital)

हाम्रा सेवाहरू
- घरायसी वातावरण
- राम्रो सुरक्षा
- योग तथा ध्यान
- शुद्ध र सफा खानाहरू
- तातो र चिसो पानी

नववर्ष २०६५ एवं ७५ औँ सद्गुरूदेव अवतरण दिवस
तथा सिद्धाश्रम शक्ति केन्द्र नवौं वर्षमा प्रवेश, गोरख प्रकट दिवस २०६५ को शुभ-उपलक्ष्यमा
हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दै तन, मन, आत्मादेखि समर्पित हुँदै गुरूकार्य गर्न सकौं
भनी परमपूज्य सद्गुरूदेवहरूको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।
साथै

प्रशासन तथा जनसम्पर्क विभागकी संयोजक साधिका विन्देश्वरी वरालज्यू सावर मातृकाजस्तो गरिमामय
तहमा प्रवेश गर्नुभएकोमा हार्दिक बधाई ज्ञापन गर्दछौं ।

# सिद्धाश्रम शक्ति केन्द्र

**सम्पर्क कार्यालय,**

**भक्तपुर**

**आरती सञ्चालन केन्द्र बोडे, आरती सञ्चालन केन्द्र सिरुटार, आरती सञ्चालन केन्द्र ठिमी**

शान्ति, आन्नन्द र वास्तविक ज्ञान प्राप्त हुन्छ
साधना र गुरुकार्यबाट
साधना र गुरुकार्य प्राप्त हुन्छ सक्षम सद्गुरुदेवबाट
र सक्षम ब्रह्माण्डनायक सद्गुरुदेवहरू प्राप्त हुनुहुन्छ **सिद्धाश्रम शक्ति केन्द्रबाट**

नववर्ष २०६५ साल तथा सिद्धाश्रम शक्ति केन्द्रको नवौं वार्षिकोत्सवको पावन अवसरमा सम्पूर्ण साधक साधिका तथा शुभेच्छुकहरूमा **हार्दिक मंगलमय शुभकामना** व्यक्त गर्दछौं ।

दीपक पराजुली, उषा पराजुली, अमुल पराजुली, आरजु पराजुली,
आँसु रिजाल, अमृत पराजुली

---

नयाँ वर्ष २०६५ सालको उपलक्ष्यमा हाम्रा समस्त ग्राहक वर्ग, शुभ-चिन्तक एवं शुभेच्छुकहरूमा हार्दिक मङ्गलमय शुभकामना

**मेडीसर्भ इन्टरनेशनल**
**थापाथली, काठमाडौं**

---

परमपूज्य सद्गुरूदेव श्री श्री महायोगी गुरू गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको श्रीचरणकमलमा कोटि-कोटि प्रणाम अर्पण गर्दै हामी समस्त नेपाली उहाँहरूको शिष्य-शिष्या बन्न सकौं, यही नै प्रार्थना गर्दै नयाँ वर्ष २०६५ सालको उपलक्ष्यमा समस्त साधक-साधिका, भक्तजन र शुभेच्छुकहरूमा शुभकामना टक्र्याउँदछु ।

**शारदा न्यौपाने**
**विशालनगर, काठमाडौं**

---

नयाँ वर्ष २०६५ साल आगमनको शुभ-अवसरमा सम्पूर्ण देशवासीहरूमा सुख, समृद्धि र सुस्वास्थ्यको कामना गर्दछौं ।

**त्रिभुवन विश्वविद्यालय कर्मचारी संघ**
**इकाई समिति परिवार**
**इन्जिनियरिङ्ग अध्ययन संस्थान, पुल्चोक, ललितपुर**

---

---

नयाँ वर्ष २०६५ सालको आगमनको शुभ अवसरमा सम्पूर्ण देशवासीहरूमा सुख, समृद्धि र सुस्वास्थ्यको कामना गर्दछौं ।

**दिलीप गुप्ता, सञ्जय गुप्ता, सत्यदेव गुप्ता**
तथा
**समस्त गुप्ता परिवार**

फोन: ४२७८३०१

---

नववर्ष २०६५ ले सम्पूर्ण देशवासीमा सुख, शान्ति एवं समृद्धिको लहर ल्याओस् भनी
**हार्दिक शुभकामना** व्यक्त गर्दछौं ।

**ध्रुवप्रसाद रेग्मी**
प्रमुख मालपोत अधिकृत तथा
**मालपोत कार्यालय परिवार**
मालपोत कार्यालय, लगनखेल, ललितपुर

---

हार्दिक मंगलमय शुभकामना

नववर्ष २०६५ सालको आगमनसँगै समस्त देशवासीहरूको जीवन सुखमय र स्वास्थ्यले भरिपूर्ण होस् । यही नै **शुभकामना** !

**प्रचलित लेखापढी सेन्टर**
हनुमानस्थान, लगनखेल

परमपूज्य सद्‌गुरूदेव श्री श्री महायोगी गुरू गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्र प्रशासन तथा जनसम्पर्क विभागकी संयोजक, चितवन जिल्ला संयोजक साधिका विन्देश्वरी वरालज्यू सावर मातृका (सामा) जस्तो गरिमामय तहमा प्रवेश गर्न सफल हुनु भएकोमा हार्दिक शुभकामना व्यक्त गर्दै उहाँको उत्तरोत्तर आध्यात्मिक उन्नति, प्रगतिका लागि सद्‌गुरूदेवहरूसमक्ष प्रार्थना गर्दछौं ।

# सिद्धाश्रम शक्ति केन्द्र

**गौरीगञ्ज सम्पर्क कार्यालय, चितवन**

**क्षेत्रपुर सम्पर्क कार्यालय, चितवन**

---

नयाँ वर्ष २०६५ का दिनहरू सम्पूर्ण नेपाली जनताहरूका लागि उन्नति, प्रगति सुख-शान्तिदायक बनोस् आराध्य सद्‌गुरूदेव श्री श्री महायोगी गुरू गोरखनाथ एवं परमहंस स्वामी निखिलेश्वरानन्द महाराजको असिम कृपाबाट आध्यात्मिक चेतना बृद्धि भई समृद्ध नेपालको निर्माणमा सहभागी हुन सकुन् भनी हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**महेश्वर न्यौपाने**
(अध्यक्ष) तथा

सहारा बचत तथा ऋण सहकारी संस्था परिवार     सारथी समूह, दुवाकोट परिवार

---

नयाँ वर्ष २०६५ को हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**Siddhababa Enterprises**
Maharajgunj, Basundhara, Kathmandu, Nepal
E-mail: siddha_baba@yahoo.com
Tel.: 01-2172398

*Our Service:* We provide all kinds of uniforms for schools and colleges that includes shirt, pant, skirt, coat, tie, belt, tracksuits, sweaters, hostel dresses, hote, hospital and security uniforms, house uniform, shoes and socks, sport dresses and many more..

---

नयाँ वर्ष २०६५ को पावन अवसरमा सम्पूर्ण देशवासीहरूमा सुख, समृद्धि एवं शान्तिको लहर छाओस् भनी हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**किरण मकाजु**
(सचिव)
एवं गाविसको कार्यालय परिवार
दधिकोट, भक्तपुर

---

**नव वर्ष २०६५ सालको उपलक्ष्यमा सम्पूर्ण देश तथा विदेशमा रहनुभएका नेपाली दाजु भाइ दिदी बहिनीहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।**

**Ram Prasad Nepal**
Director
Mob: 9841033657
9851026065

**Elan International Pvt. Ltd**
**P. O. Box: 8973, NPC 666**
**New Baneshwor, Kathmandu, Nepal**
**Tel.: +977-1-4473161, 4470559**
**Fax: +977-4464668**
**E-mail: elan@wlink.com.np, Website: elanint.com**

विश्वासनीय एवं भरपर्दो वैदेशिक रोजगारका लागि हामीलाई सम्झनुहोस् ।

नववर्ष २०६५ एवं ७५ औँ सद्गुरूदेव अवतरण दिवस
तथा सिद्धाश्रम शक्ति केन्द्र नवौं वर्षमा प्रवेश, गोरख प्रकट दिवस २०६५ शुभ-उपलक्ष्यमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दै तन, मन, आत्मादेखि समर्पित हुँदै गुरूकार्य गर्न सकौं भनी परमपूज्य सद्गुरूदेवहरूको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

प्रशासन तथा जनसम्पर्क विभागकी संयोजक साधिका विन्देश्वरी वरालज्यू सावर मातृकाजस्तो गरिमामय तहमा प्रवेश गर्नुभएकोमा हार्दिक बधाई ज्ञापन गर्दछौं ।

**उप-संयोजक**
**कोपिला थापा**
**आन्तरिक जनसम्पर्क उपविभाग**

### जानिफा नियन्त्रण युनिट

**किरिट गिरी**
मुकेश धिताल
सुनिता रेग्मी
तेजस्वी गिरी
सविना आचार्य
षष्टिका गुरागाई
उत्तम पाठक
सुनिता न्यौपाने
किशोर श्रेष्ठ
गीतादेवी मानन्धर
ध्रुव विष्ट
नरेश राजकर्णिकार
मिङ्मे शेर्पा
रेखा अधिकारी

सहयोगी
प्रजुला श्रेष्ठ, शोभा ज्ञवाली, पारिजात बराल, शोभा सापकोटा, नारायणवावु धिताल, कविता थापा, शेखरनिधि पौडेल, रोजिना महर्जन, रिता खत्री, राधा फुयाल, वर्षा शर्मा, नन्दा विष्ट, सुन्दरराज आचार्य, साधनासिंह शाही

### प्रजापति ले.प्र युनिट

**ज्ञानु रेग्मी**
सरिता शर्मा
सुप्रभा नकर्मी
अन्नपूर्ण के.सी.
मालती विडारी (सुवेदी)
चन्द्रविक्रम शाह
लक्ष्मी तिवारी
सुदम ढकाल
विजया शाही
पवित्र गुरागाई (भट्टराई)
पुष्पलता तिवारी
सुलोचना बानिया

### शुभेच्छा सोले युनिट

**मोहन गिरी**
रीता पौडेल
मोहनदेवी डंगोल
बिन्दु देवकोटा
शोभा पौडेल
ज्योति महर्जन
बेलबहादुर गुरुङ
शारदा महर्जन
सृजना कुइकेल
लोगकुमारी तिमिल्सिना
लेखनाथ खापुङ्ग
ज्योति शाही
उर्मिला गड्तौला
रीता स्थापित

**उप-संयोजक**
**जयलाल गुरुङ**

### बाह्य प्रशासन उपविभाग

सदस्य
भगवानप्रसाद पाण्डे
गोकुल लिम्बु
बुद्धिराज भण्डारी
राजनप्रसाद खतिवडा

सहयोगी
रामगोपाल फैंजु
किशोर थापा
केशव पाण्डे
विनोद कु. श्रेष्ठ
रामचन्द्र दवाडी
अर्पण महर्जन
दिलबहादुर लुङ्गेली मगर
जगत गौतम

**उप-संयोजक**
**होमबहादुर थापा**
**आन्तरिक प्रशासन उपविभाग**

### सर्वकल्याण भण्डारण युनिट

**कैलाश सुब्बा- प्रमुख**
शेखर पौड्याल
कुमार ठकुरी
अशोक देवकोटा
अर्जुनबाबु धिताल
कमला सोडारी
आनन्द पौड्याल
सुस्मिता देवान
जुलुम श्रेष्ठ
सुमन आचार्य
बबी श्रेष्ठ
चेतनाथ पोखरेल
अन्जु थापा
सुधा तण्डुकार
सन्तु लामिछाने

सहयोगी
अनुशा शैंजु, लक्ष्मी गुरागाई, जीवन गौतम, खड्गबहादुर श्रेष्ठ, सन्तोष प्र. गुप्ता, महेश डंगोल, मीरा आचार्य, अन्जु हमाल, आरती प्रधान, आशा थापा, सन्ध्या सापकोटा, सान्नानी शिलवाल, राधादेवी श्रेष्ठ, मीना थापा, किशोरकुमार खड्का, अबिना थापा, स्वेता खत्री, विमला जिम्बा, विष्णुकुमार बस्नेत, कमलादेवी अधिकारी, कोपिला थापा, माधव बुढाथोकी, पवित्रा खरेल, शोभा बराल, डालिका मिजार, थना रानाभाट, गंगालक्ष्मी शाही, फुलमाया जिम्बा, रामकला कार्की, नबिन थापा, ज्योति सैंजु, अम्बिका खड्का, उषा लामिछाने, शेषनारायण मानन्धर, रोशनी पराजुली, पशुपति कँडेल, कविता सिंखडा, किस्मत खरेल, कञ्चन खरेल, सुरज गुरुङ, रिता कँडेल, हरिलाल पौडेल, मुना घले, पद्मा अधिकारी

### रसिली आहारण युनिट

**गीता के.सी.- प्रमुख**
चेतना गुरागाई
विजया अधिकारी
चन्द्रमाया लिम्बु
उर्मिला चालिसे
अजित सापकोटा
विना सुवाल
पार्वती धगोडा
सिताराम देउला
योगेन्द्र श्रेष्ठ
रत्नबहादुर खत्री
प्रविन ढकाल
गंगा लामा

सहयोगी
चण्डिका थापा
जयन्ती मल्ल
लिलामाया सुनुवार
गंगामाया गुरुङ
कमला कुँवर
नानु शिवाकोटी
कमला लामा
लिलादेवी सिंखडा
अम्बिका कोइराला
गौरी ज्ञवाली
शारदा पुडासैनी
मैया थापा
मायादेवी महर्जन
इन्दिरा पौड्याल
अन्जु बलामी
नानीमैया अधिकारी
रुद्रमाया पाण्डे
लक्ष्मीप्रसाद पाण्डे

### श्री अन्नपूर्ण पुष्टता युनिट

**सुमित्रा लामा- प्रमुख**
सन्तोष साह
मोहनप्रसाद लामिछाने
ओमबहादुर मगर
भरत थापा मगर
शोभा गौतम
सन्तबहादुर तामाङ
शारदा विष्ट
नानीमाया महर्जन
मिठू कार्की
लक्ष्मी के.सी.
लक्ष्मीदेवी मैनाली
सरस्वती तण्डुकार
मुनु श्रेष्ठ
द्वारिका चालिसे

सहयोगी
कलमाया त्रिपाठी
पार्वती महर्जन
राधिका बानिया
उषा बानिया
तुल्सी माया महर्जन

### प्रवेश शिष्टता युनिट

**सुषमा लामिछाने- प्रमुख**
मोतिलाल लामा
दीपा खड्का
जयबहादुर राई
रुक्मिणी तण्डुकार
तीर्थराम श्रेष्ठजुनु राई
लोकबहादुर नेपाली
उद्धब सुवेदी
फुलमाया कार्की
लक्ष्मी रिजाल
सितादेवी पराजुली
लक्ष्मीदेवी मैनाली
शर्मिला राजवाहक
तीर्थराम श्रेष्ठ
दिपक महर्जन

नववर्ष २०६५ को उपलक्ष्यमा सम्पूर्ण विश्व गोरक्ष निखिल शक्तिले आपूरित होस् भनी हार्दिक शुभकामना व्यक्त गर्दछौं ।

| लेखनाथ अधिकारी, सचिव<br>एवं<br>शेषनारायण गाविस परिवार | शेखरनिधि पौड्याल, सचिव<br>एवं<br>टल्कु डुँडेचौर गाविस परिवार |
|---|---|

नववर्ष २०६५ को उपलक्ष्यमा समस्त यात्रु महानुभावहरूलाई सद्गुरूदेवहरूको कृपा, अनुकम्पा एवं आशीर्वाद प्राप्त भइरहोस् भनी प्रार्थना गर्दछौं ।

**फर्पिङ्ग भेगिय टाटा सुमो व्यवसायी परिवार**
तथा
**कुवेर भेहिकल सर्भिस,फर्पिङ्ग**

रिजर्भको लागिः ९८४१०३९९१५, ४७१०५४२

शुभ रहोस् नयाँ वर्ष
छाओस् सर्वत्र शान्ति र हर्ष

**नयाँ वर्ष २०६५ सालको उपलक्ष्यमा सम्पूर्ण देशवासी महानुभावहरुमा सुख, शान्ति एवं समृद्धिको मंगलमय शुभकामना व्यक्त गर्दछु ।**

**चीनीकाजी श्रेष्ठ**
तीनकुने, गैरीगाउँ

रोम प्रतिरोममा परमपूज्य सद्गुरूदेवहरूको गोरक्ष निखिल युग निर्माण योजनाको तरंग फैलियोस् । प्रत्येक अप्रिल २१ तारिखको आगमनसँगै कार्यकर्ताहरूमा आध्यात्मिक क्रान्तिको ज्वाला दन्कियोस् ।

**नव वर्ष २०६५ तथा सिद्धाश्रम शक्ति केन्द्रको नवौं वर्षको उपलक्ष्यमा सम्पूर्ण साधक साधिका एवं शुभेच्छुकहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।**

**ध्रुव पराजुली**
तथा
**सम्पूर्ण परिवार**
तीनकुने, गैरीगाउँ काठमाडौं

## गुनासो छ भने लेख्नुहोस्

- के तपाईंको पत्रिकासँग सम्बन्धित कुनै गुनासो छ ?
- के तपाईंलाई पत्रिका नियमित प्राप्त भइरहेको छैन ?
- के तपाईंको सदस्यता अवधिमा त्रुटि देखिन्छ ?
- के तपाईंलाई पत्रिका सदस्य विस्तार गरेबापतको उपहार प्राप्त भएको छैन ?
- के तपाईं पत्रिका आइपुग्ने आफ्नो ठेगाना परिवर्तन गर्न चाहनुहुन्छ ?
- के तपाईंका यसका अतिरिक्त अरू पनि गुनासा तथा समस्याहरू छन् ?

आफ्नो गुनासोलाई पत्र, इमेल, फोनबाट वा भेटेर पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभागमा तुरुन्त जानकारी गराउनुहोस् । सम्भव भएसम्म समस्याको समाधान तुरुन्त हुनेछ ।

साथै, गोरक्ष निखिल वाणीका पुराना अङ्कहरू चाहिएमा सम्पर्क राख्नुहोला ।

**पत्रिका वितरण तथा पुस्तकालय व्यवस्थापन उपविभाग**, फोन : ०१६२२५१७७ वा

## कविता

### सिद्धाश्रम

पुस माघ महिनाजस्तै तुषारोले खाएको जिन्दगीमा
सिद्धाश्रममा आएर नयाँ जीवन पाएकी छु,

सिद्धाश्रमको नाम सुन्दा आफूलाई भाग्यशाली ठानेकी छु,
रोई-रोई थाकेको जिन्दगीमा सद्गुरुदेवलाई पाएकी छु,

सद्गुरुदेवबाट कृपा माग्न सिद्धाश्रममा आएकी छु,
बाधा, अड्चन हटाउन साधनामा भाग लिएकी छु,

साधना त हाम्रो लागि प्राणभन्दा प्यारो रहेछ,
सिद्धाश्रम त हाम्रो लागि भविष्यको द्वार रहेछ,

सिद्धाश्रममा आएपछि अहं भाव लिनुहुन्न,
अहं भाव लिनेलाई गुरुदेवले कृपा गर्नुहुन्न,

त्यसैले त सिद्ध शिष्य सिद्धाश्रमको साधक हुन्छ,
सिद्ध शिष्यका गुरु गोरख र निखिलेश्वरानन्द हुनुहुन्छ,

श्रद्धा, समर्पण गरी लाग्दा गुरु कृपा अवश्य पाइन्छ,
ध्यानमा भाग लिंदा पनि गुरु कृपा मिलेकै छ,

गुरु कृपा लिन पनि आफू अगाडि बढ्न सक्नुपर्छ,
आफ्नो मन एकत्रित नहुँदा गुरु कृपा कहाँ मिल्छ,

सबै समस्याको समाधान गरिदिने सद्गुरुदेव हुनुहुन्छ
सद्गुरुदेवको शरणमा पर्दा समस्या समाधान हुन्छ, हुन्छ

**सृजना कुइँकेल, डाँची, काठमाडौं ।**

### वैशाख महिनाका चाडपर्व

| गते | चाडपर्व |
|---|---|
| १ गते | अष्टमीव्रत, गोरखकाली पूजा, चैते दशैं |
| २ गते | **श्री शिव गोरक्ष हवन**, रामनवमी |
| ३ गते | **तान्त्रोक्त वटुक भैरव हवन** |
| ४ गते | **तान्त्रोक्त महालक्ष्मी हवन**, कामदा एकादशीव्रत |
| ५ गते | **तान्त्रोक्त वगलामुखी हवन**, प्रदोषव्रत |
| ६ गते | महावीर जयन्ती |
| ८ गते | हनुमान जयन्ती |
| ९ गते | **सद्गुरुदेव अवतरण दिवस (अप्रिल २१ तारीख)** |
| १६ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| १९ गते | बरुथिनी एकादशीव्रत |
| २१ गते | प्रदोषव्रत |
| २३ गते | मातातीर्थ औंसी, आमाको मुख हेर्ने दिन |
| २५ गते | परशुराम जयन्ती |
| २६ गते | अक्षय तृतीया |
| २७ गते | शंकराचार्य जयन्ती, ल.पु. मत्स्येन्द्रनाथ रथ यात्रा |
| ३० गते | अष्टमीव्रत, गोखकाली पूजा |
| ३१ गते | सीता जयन्ती |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे–गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे–आरती**

# २०६४ लाई फर्केर हेर्दा

नववर्षको शुभारम्भसँगसँगै हामीले २०६४ साललाई बिदा गरिसकेका छौँ । परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप स्थापित सिद्धाश्रम शक्ति केन्द्र (सि.श.के.) ले आफ्नो नवौँ वसन्त पार गरी दशौँ वर्षमा प्रवेश गरेको छ । कलिलो उमेरमै अनेकौँ संघर्ष र चुनौतिलाई स्वीकार गर्दै सफलताको शिखरमा पुग्न सफल यस केन्द्रले गत वर्ष पनि ऐतिहासिक उपलब्धि हासिल गर्न सफल भयो ।

गत वर्ष अर्थात् २०६४ सालमा संस्थाले संचालन गरेका कार्यक्रम तथा यसले हासिल गरेका उपलब्धिहरू यस प्रकार छन्–

**१. दैनिक गतिविधि–**

सि.श.के.मा दैनिक हुने गतिविधिअन्तर्गत बेलुकी ५:०० बजेको नित्य आरती प्रत्येक दिन संचालन भयो । गत वर्ष देशमा भएका बन्द, हडताल जस्ता विभिन्न कठिनाइका बावजूद पनि नियमित आरतीमा साधक साधिकाहरूको सहभागिता उल्लेखनीय रह्‍यो । साथै आश्रम खुल्ने समयमा पनि कुनै फेरवदल भएन ।

**२. नियमित कार्यक्रम**

सि.श.के.ले गत वर्ष आफ्ना नियमित कार्यक्रमहरूलाई सफलतापूर्वक संचालन गर्न सफल भएको छ । देशमा भएका विभिन्न अस्थिरता र अन्यौलले पनि संस्थाका नियमित कार्यक्रमलाई कुनै पनि असर पार्न सकेन । संस्थाबाट सम्पन्न नियमित कार्यक्रमलाई निम्नानुसार उल्लेख गरिन्छ–

**२.१. साप्ताहिक कार्यक्रम–**

क) प्रत्येक बिहीबार संचालन हुँदै आइरहेको परमपूज्य सद्‌गुरुदेवहरूको दिव्य पूजन कार्यक्रम सफलतापूर्वक संचालन भयो भने कार्यक्रमहरूमा साधक-साधिकाहरूको सहभागिता उल्लेख्य रह्‍यो ।

ख) कार्यकर्ताहरूका लागि आध्यात्मिक खुराक एवं कार्य क्षमता अभिवृद्दि हेतु प्रत्येक शुक्रबार दिउँसो ४ बजे संचालन हुँदै आइरहेको स्टाफ मिटिङ्ग कार्यक्रम गत वर्ष पनि विना रोकावट यथावत्‌रूपमा नै सम्पन्न भयो ।

ग) प्रत्येक सोमबार बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म रेडियो सिटी एफ.एम ९८.८ मेगाहर्जबाट संचालन भइरहेको गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम नियमितरूपमा संचालन भयो भने गत वर्ष नै रेडियो मध्य-पश्चिम एफ.एम., सामुदायिक रेडियो मुक्तिनाथ एफ.एम र रेडियो भेरी एफ.एम. थप भई हाल जम्मा सातवटा स्टेशनहरूबाट गोरक्ष निखिल सन्देश कार्यक्रम प्रसारण भइरहेको छ ।

(घ) परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रमा प्रत्यके सोमबार विशेष गरेर कार्यकर्ताहरूका लागि प्राप्त भएको विशेष ब्लेसिङ्ग ध्यान कार्यक्रम गत वर्ष विशेष परिस्थिति बाहेक नियमित रूपमा नै सम्पन्न भयो, जसबाट सयौँ कार्यकर्ताहरू लाभान्वित भएकाछन् ।

**२.२. मासिक कार्यक्रम–**

क) प्रत्येक अंग्रेजी महिनाको २१ तारिखका दिन संचालन हुँदै आइरहेको दिव्य गुरु महोत्सव कार्यक्रम गत वर्ष पनि सफलतापूर्वक सम्पन्न भयो । गत वर्षका सबै दिव्य गुरु महोत्सव कार्यक्रम काठमाडौँको बसुन्धरामा रहेको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्राङ्गणमा संचालन भएको थियो । प्रत्येक महिनाको कार्यक्रममा साधक साधिकाहरूको चापले विद्याश्रमको प्राङ्गण पनि दिन प्रतिदिन साँगुरिदै गइरहेको महशुस गर्न सकिन्छ ।

ख) प्रत्येक महिनाको पहिलो सोमबार श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार वटुक भैरव हवन, पहिलो बुधबार महालक्ष्मी हवन, पहिलो बिहीबार बगलामुखी हवन कार्यक्रम गत वर्ष पनि निर्वाधरूपमा नै सम्पन्न भए । प्रत्येक हवन कार्यक्रमहरूमा साधक

साधिकाको चापमा अत्यधिक वृद्दि भइरहेको छ, जसले यस हवनको गरिमा, महिमा र उच्चतालाई प्रष्ट पार्दछ । गत वर्ष पनि यी कार्यक्रमहरू नियमित समय र स्थानमा सफलतापूर्वक नै सम्पन्न भए ।

(ग) परमपूज्य सद्‌गुरुदेवहरूको महान योजनालाई साकार पार्न गुरुकार्यमा तत्पर रहेका कार्यकर्ताहरूका लागि कार्य कुशलतामा वृद्धि हेतु महिनाको प्रत्येक २० र २१ गते सञ्चालन भइरहेको तालिम तथा प्रशिक्षण कार्यक्रमले गत वर्ष पनि निरन्तरता पायो । गतवर्ष मात्रै सयौँ कार्यकर्ताहरूलाई तालिम दिई हालसम्म कार्यकर्ता पङ्तिमा हजारौँ कार्यकर्ता निर्माण भइसकेकाछन् । यसरी तालिम प्राप्त कार्यकर्ताहरूले नै केन्द्रलगायत देशका विभिन्न सम्पर्क कार्यालय, आरती सञ्चालन केन्द्र, प्रचार प्रसार कक्षहरूमा गुरु कार्यलाई अगाडि बढाइरहेका छन् ।

**२.३ वार्षिक कार्यक्रम–**

क) परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको ७४ औँ अवतरण दिवस गत वर्षको वैशाख ६, ७ र ८ गते त्रिदिवसीयरूपमा गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा करिव २,२०० भन्दा बढी साधक साधिकाहरूको उपस्थितिमा अत्यन्त भव्यताका साथ सम्पन्न भएको थियो । भजन-कीर्तन, कविता वाचन, नृत्य, विशेष गुरु पूजन, प्रवचन, विशेष ध्यानका साथ सम्पन्न यस कार्यक्रममा संस्थाको आठौँ वार्षिकोत्सव पनि भएकोले संस्थाको प्रगति विवरण र प्रतिवेदन पनि पेश गरिएको थियो । यो कार्यक्रम केन्द्रमा मात्रै नभएर संस्थाका विभिन्न सम्पर्क कार्यालयहरूलगायत विदेशमा अष्ट्रेलिया र अमेरिकामा पनि विशेष कार्यक्रमका साथ मनाइएको थियो ।

ख) सवा लाख रोट अर्पण कार्यक्रम–

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा सवा लाख रोट अर्पण गर्ने कार्यक्रमले गत वर्ष पनि नियमितता पायो । गोरखा जिल्लाको गोरखगुफामा गोरक्ष प्राकट्य दिवस वैशाख १९ गतेदेखि २९ गतेसम्म (११ दिन) विशिष्ट प्रक्रियाबाट निर्माण गरी विशिष्ट विधि-विधानका साथ सवा लाखभन्दा बढि रोट अर्पण गरिएको थियो । सिद्धाश्रम शक्ति केन्द्रले सवालाख रोट अर्पण कार्यक्रम सञ्चालन गरेको यो चौँथो रोट कार्यक्रम हो । सामान्य मनुष्यका लागि दुर्लभ मानिने यस्तो दिव्यतम कार्यक्रममा सूक्ष्म सत्ताबाट सावर संरचना शक्ति केन्द्रको जाटिटा नामक विशेष टिमको सक्रियता रहेको सो कार्यक्रममा स्थूलरूपमा सिशकेका कार्यकर्ताहरू खटिनु भएको थियो । उक्त अवसरमा सावर संरचना शक्ति केन्द्रको प्रकाशन 'गोरक्ष भूमि परिचय'लगायत सातवटा पुष्प (कृति) हरू शारदा पुष्प, कल्याण पुष्प, मनष पुष्प, योग पुष्प, ज्ञान पुष्प, दैवी पुष्प र आत्म पुष्पको लोकार्पण पनि गरिएको थियो । गोरखाको उकालो, चर्को घाम, पानीको अभावलगायत थुप्रै कठिनाईहरूका बावजूद पनि यो कार्यक्रम सफलतापूर्वक सम्पन्न भएको थियो ।

**ग) महाप्रयाण दिवस–**

परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले महाप्रयाण लिनुभएको दिन (जुलाई ३ तारीख) लाई गतवर्षको असार १९ गते सिशके केन्द्रीय कार्यालयलगायत सम्पूर्ण सम्पर्क कार्यालयहरूमा बिहान १० देखि ५ बजेसम्म विशेष कार्यक्रमको आयोजना गरि मनाइयो । परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य मन्त्र जप गरेर मनाइएको थियो । सम्पूर्ण साधक साधिका भक्तजनहरूले पनि यस्तो दिव्य अवसरमा गुरुदेवको दिव्य मन्त्र जप गर्ने सौभाग्य प्राप्त गर्नु भएको थियो । आश्रम प्राङ्गणमै सञ्चालन भएको यस कार्यक्रममा साधक साधिकाहरूको चापले आश्रममा बसेर जप गर्ने स्थानको अभावको महशुस गर्न सकिन्थ्यो ।

**घ) श्री शिव गोरक्ष महोत्सव–**

सिशकेले यस पटकको श्री शिव गोरक्ष महोत्सवअन्तर्गत श्रावण महिनाभरि प्रत्येक मंगलबार पशुपति मृगस्थलीस्थित गोरक्ष शक्ति पीठमा रोट अर्पण, दैनिक दिउँसो ३:०० बजेदेखि विशेष भजन-कीर्तन, प्रत्येक दिन भण्डाराका साथै परमपूज्य सद्‌गुरुदेवहरूबाट प्राप्त दिव्य मन्त्र जप गरेर अत्यन्त भव्य एवं हर्षोल्लासका साथ मनायो । त्यसैगरी यसपटकको श्री शिव गोरक्ष महोत्सवमा सामाजिक कार्यले पनि प्रश्रय पाएको थियो । १ गतेदेखि मसान्तसम्म नि:शुल्क योग शिविर, बाढी-पीडितका लागि राहत संकलन तथा मसान्तमा रक्तदान कार्यक्रम पनि सो महिना सम्पन्न भएको थियो । विभिन्न सम्पर्क कार्यालयहरूमा पनि सो कार्यक्रम सम्पन्न भएको थियो ।

**ङ) गुरु पूर्णिमा महोत्सव–**

शिष्यहरूको सबैभन्दा ठूलो चाड गुरु पूर्णिमालाई सिशकेले गत वर्षको श्रावण १४ गते सोमबार अत्यन्त भव्यताका साथ आश्रम परिसरस्थीत वीरेन्द्र पार्कमा सम्पन्न गऱ्यो । विशेष पूजन, मन्त्रजप, ध्यान, भजन-कीर्तन, नृत्य, कविता वाचन, शुभकामना मन्तव्य आदि विभिन्न कार्यक्रमका साथ सम्पन्न उक्त कार्यक्रममा साधक-साधिका, भक्तजन तथा स्थानीय व्यक्तिहरूको उल्लेखनीय सहभागिताले कल्कि मन्दिर परिसर र सो पार्कले उपस्थीत साधक साधिकाहरूलाई समेट्न सकिरहेको थिएन । बेजोड पानीको बर्षाले हिलाम्य भएतापनि साधक साधिकाको भाव र उत्साहमा कुनै कमी देखिन्थेन । सबैजना नृत्यमय भएको कार्यक्रममा सारा टोल नै उत्सवमय भएको देखिन्थ्यो ।

**च) महाशिवरात्रि पर्व–**

यसपटकको महाशिवरात्रि पर्वमा पनि यस केन्द्रले गतवर्ष फाल्गुण २३ गते बिहीबार

पशुपति क्षेत्रमा विशेष भजन-कीर्तन एवं नि:शुल्क स्वास्थ्य शिविरको आयोजना गरेर सामाजिक एवं आध्यात्मिक गतिविधिलाई अगाडि बढाएको थियो । पशुपति क्षेत्र परिसर वनकालीमा रहेको परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको दिव्य मन्दिर परिसरमा आयोजित कार्यक्रममा साधक साधिकाहरू एवं पशुपतिनाथको दर्शन गर्न पाल्नुहुने श्रद्धालु भक्तजनको उल्लेख्य सहभागीले कार्यक्रममा छुट्टै रौनकता छाएको थियो । साथै यस पटकको महाशिवरात्रिमा पहिलोपटक केन्द्रीय कार्यालय एवं संस्थाका सबै सम्पर्क कार्यालयहरूले भगवान् सदाशिवको विशेष पूजन गर्ने सौभाग्य पायो ।

**छ) गुरुमाताको शुभजन्म दिवस–**

प्रत्येक वर्षको अप्रिल ८ तारिखमा परमवन्दनीय गुरुमाताको जन्मोन्सव दिवस मनाउँदै आइरहेको सिशकेले यसपटक पनि गत चैत २६ गते बेलुकी ४:०० बजेदेखि करिव ८:०० बजेसम्म विशेष कार्यक्रमकासाथ भव्यतापूर्वक सम्पन्न गर्‍यो । विशेष भजन-कीर्तन, दीपावली एवं प्रसाद वितरण आदि कार्यक्रमको आयोजना गरेर उल्लासमय तरीकाले मनाइएको कार्यक्रममा साधक साधिकाहरू भजन-कीर्तन एवं नृत्यमा मस्त भएर माताको जन्म दिवसलाई मातामय बनाइएको थियो ।

**ज) विशेष चाड पर्व–**

विभिन्न चाड पर्वहरूका विकृतिहरूलाई चिरफार गर्दै आध्यात्मिक महत्त्वलाई उजागर गर्ने उद्देश्यले सिशकेले विभिन्न चाड पर्वहरूमा विशेष कार्यक्रमहरू सफलतापूर्वक सम्पन्न गर्दै आइरहेको छ । यसै क्रममा गत वर्ष सफलतापूर्वक विशेष कार्यक्रम सम्पन्न गरेका कार्यक्रमहरू यस प्रकार छन्– नव वर्षको कार्यक्रम, ऋषि तर्पणी, हरितालिका (तीज), ऋषिपञ्चमी, श्रीकृष्णजन्माष्टमी, श्रीपञ्चमी आदि ।

यसका अतिरिक्त पहिलोपटक लक्ष्मीपूजाको दिन महालक्ष्मीको विशेष पूजन कार्यक्रम पनि सम्पन्न गर्ने सुअवसर प्राप्त भएको थियो । समाजमा फैलिएका विकृति र विसंगतिविरुद्ध आध्यात्मिक चेतना जगाउँदै परमपूज्य सद्‌गुरुदेवहरू एवं माता महालक्ष्मीको विशेष झाँकी एवं पूजन तथा आरतीका साथ साधक-साधिकाहरूको घरहरूमा द्यौसी-भैलो खेलियो । यस पटकको द्यौसी-भैलो कार्यक्रमलाई केन्द्रलगायत सम्पर्क कार्यालयहरूले विशेषरूपमा मनाए ।

झ) यस पटकको नवरात्रिको पर्वलाई सिशकेले पहिलोपटक अलि फरक तरिकाबाट मनाउने सौभागय प्राप्त गर्‍यो । स्थानीय कल्कीनारायणको मन्दिर तथा भगवान् शिवको मन्दिरमा उक्त पर्व सञ्चालन भएको थियो ।

**३. संस्थागत विस्तार–**

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले संगठन विस्तारको क्रममा गत वर्ष विशेष फड्को मार्न सफल भएको छ । संगठन विस्तारका विभिन्न क्षेत्रमा चोतर्फी झाँगिन सफल यस केन्द्रको विस्तारलाई पनि विभिन्न भागमा वर्गीकरण गरी चर्चा गरिएको छ ।

**३.१. संगठन विस्तार–**

सिद्धाश्रम शक्ति केन्द्रले गत वर्षमा संगठन विस्तारमा उल्लेखनीय सफलता हासिल गर्न सफल भएको छ । राष्ट्रिय र अन्तर्राष्ट्रिय दुवै रूपबाट गतवर्ष संगठन विस्तारका पाइलाहरू अघि बढ्न सफल भएको छ ।

(क) राष्ट्रियरूपमा गतवर्ष एकवटा मात्रै सम्पर्क कार्यालय विस्तार भए पनि देशमा थुप्रै आरती संचालन केन्द्रहरू खुले । त्यसैगरी टोल-टोलमा गुरु आरती सञ्चालन गर्ने उद्देश्यले गत वर्ष मात्रै आएको प्रचार-प्रसार कक्षको अवधारणाले पनि देशका अनगिन्ती ठाउँमा प्रचार-प्रसार कक्षहरू खुलेका छन् जहाँबाट परमपूज्य सद्‌गुरुदेवहरूको एवं आश्रमको प्रचार एवं प्रसार कार्यक्रम तीव्ररूपमा अगाडि बढिरहेको छ ।

(ख) त्यसैगरी अन्तर्राष्ट्रिय स्तरमा पनि यस संस्थाले विशेष फट्को मार्न सफल भएको छ । रुस जस्तो देश, जहाँ न धर्म मिल्दछ, सँस्कृति मिल्दछ न जाति मिल्दछ, त्यस्तो ठाँउमा पनि तान्त्रिक ध्यानका कक्षाहरू सञ्चालन हुन सफल भए । भगवान सदाशिवको विशिष्ट साधना कार्यक्रम सफलतापूर्वक सम्पन्न भयो जसबाट सयौँ व्यक्तिहरूले परमपूज्य सद्‌गुरुदेवहरू प्रति आस्था र विश्वासका साथ साधना ध्यान गरी आफ्नो जीवनशैली परिवर्तन गरेका छन् । सो कार्यक्रम सञ्चालन गराउनका लागि युरोप र एसियाका विभिन्न शहरहरूमा संस्थाको तर्फबाट आदरणीय सा.प.नं. १ र २ का सदस्यज्यूहरू गत आषाढ २३ गतेदेखि भाद्र १५ सम्म र माघ २३ गतेदेखि चैत्र ८ गतेसम्म गरेर दुईपटक भ्रमण गर्नुभएको थियो । अन्य देशहरूमा पनि संगठन विस्तारका लागि विभिन्न तयारी भइरहेका छन् ।

**३.३. सावर मातृकाको उदय–**

गत वर्ष सिद्धाश्रम शक्ति केन्द्रले मनुष्य जातिकै लागि नवीन एवं दुर्लभ तथा दिव्य पथको ढोका खोल्न सफल भएको छ । सिद्धाश्रम शक्ति केन्द्र, प्रशासन तथा जनसम्पर्क विभागकी संयोजक साधिका विन्देश्वरी बरालज्यूले मनुष्य जातिकै लागि पहिलो सावर मातृका जस्तो गरिमामय तहमा पुग्ने सौभाग्य पाउनु भएको छ । गत चैत २० गतदेखि लागू हुने गरी उहाँ सावर मातृकाको तहमा रहेर गुरुकार्य गरिरहनु भएको छ । सावर मातृका सावरपन्थी तह नै हो, तर पनि नारी जातिमा यसअगाडि यस्तो तहमा पुग्न कोही पनि सफल थिएन । उहाँ सारा मनुष्य जीवनका महिला वर्गकै लागि ढोका खोल्न सफल यस तह कै पहिला व्यक्तित्व हुनुहुन्छ ।

**३.४ गोरक्ष निखिल मन्दिरको शिलान्यास–**

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा आशीर्वादस्वरूप कास्की जिल्लाको माझठाना गाविस भगवतीटारमा गोरक्ष निखिल मन्दिरको निर्माण हुने भएको छ। गत फागुन २७ गते आदरणीय सा.प.नं.३ का सदस्यज्यूले एक विशेष कार्यक्रमकासाथ उक्त मन्दिरको शिलान्यास गर्नुभएको हो । परमपूज्य सद्‌गुरुदेवहरूको विशेष पूजन, हवन, भजन-कीर्तन, आरतीका साथ शुभारम्भ भएको उक्त कार्यक्रममा अकल्पनीय जनसहभागितामा शिलान्यास गरिएको थियो। हाल उक्त मन्दिर निर्माणका लागि आवश्यक सहयोग जुटाउने कार्य भइरहेको छ।

४. समाजमा आध्यात्मिक शिक्षा लागु गराउने उद्देश्यले सिशकेद्वारा नमूना विद्यालयका रूपमा खोलेको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले गत वर्ष ६ र ७ कक्षा थप गरी नर्सरीदेखि कक्षा ७ सम्म पठनपाठन गराउँदै आफ्ना गतिविधिलाई अगाडि बढाइरहेको छ। विद्यार्थीहरूको चापले गर्दा थप नयाँ भवन भाडामा लिएको छ विद्यार्थीहरूको चापले गर्दा थप नयाँ भवन भाडामा लिएको छ । विद्यार्थीहरूलाई अत्मिक वातावरणमा आध्यात्मिक एवं आधुनिक शिक्षा प्रदान गर्न गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम सफल भएको छ।

**५ केन्द्रीय कार्यालय आफ्नै भवनमा–**

परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ तथा परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादस्वरूप सिशके नेपाल आफ्नै भवनमा स्थानान्तरण भएको छ। काठमाडौंको बसुन्धरास्थित संस्था कै सम्पर्क कार्यालय रहेको भवनमा आषाढ ७ गते दिव्य गुरु महोत्सवको शुभ अवसर पारेर केन्द्रीय कार्यालय सारिएको हो ।

**६. प्रकाशन**

गत वर्ष पनि सिशकेले आफ्नो मुखपत्रलाई निरन्तररूपमा प्रकाशन गर्न सफल भएको छ । वैशाख अंकदेखि नयाँ साइज र आकर्षक साजसज्जाका साथ प्रकाशन भएको गोरक्ष निखिल वाणीले गत मंसिर अंकलाई सयौं अंकको रूपमा प्रकाशित गरी गत वर्षमा १०४ अंक निकाल्न सफल भयो । त्यसैगरी प्रत्येक वर्ष प्रकाशन गर्दै आइरहेको क्यालेण्डर गत वर्ष पनि आकर्षक साजसज्जाका साथ प्रकाशन गर्न सफल भयो । गत वर्ष पत्रिका सदस्यतामा पनि उल्लेखनीय वृद्धि भएको छ । गत वर्ष २१३३६ सदस्य बन्नुभएको छ।

**७ विविध–**

**क) संरक्षण–निरीक्षण भ्रमण कार्यक्रम–**

सम्पर्क कार्यालयहरूलाई संरक्षण प्रदान गर्न तथा त्यहाँको गतिविधिको निरीक्षण गर्न सद्‌गुरुदेवहरूकै आदेश निर्देशनअनुरूप विभिन्न जिल्लाका सम्पर्क कार्यालय तथा प्रस्तावित सम्पर्क कार्यालयहरूमा समय समयमा संरक्षण-निरीक्षण भ्रमण कार्यक्रमहरू सम्पन्न भए ।

**ख) लेखा तथा वितरण तालिम–**

कार्यकर्ताहरूलाई आफ्नो कार्यक्षेत्रमा दक्षता हासिल गराउने उद्देश्यले समय समयमा हुने विभिन्न तालिमहरूमध्ये गत वर्ष लेखा तथा वितरण तालिमले पनि विशेष स्थान पाएको थियो। केन्द्रलगायत विभिन्न सम्पर्क कार्यालय तथा आरती संचालन केन्द्रमा भएको उक्त तालिम कार्यक्रमले कार्यकर्ताहरूलाई प्रशिक्षित बनाएको थियो ।

**ग) रिफ्रेशमेन्ट तालिम–**

कार्यकर्ताहरूलाई पुनर्ताजगी गर्ने उद्देश्यले बेला-बेलामा सम्पन्न हुँदै आइरहेको रिफ्रेशमेन्ट तालिम कार्यक्रमले गत वर्ष पनि सम्पन्न भए । गत वर्षको असोज १९ गते र माघ १२ गते गरेर दुईपटक यो तालिम सम्पन्न भएको थियो ।

**घ) जिल्लाका गतिविधि–**

गत वर्ष सिशकेका विभिन्न सम्पर्क कार्यालयहरूमा पनि संस्थाका दैनिक तथा नियमित कार्यक्रम यथासमयमै सम्पन्न भए । यसका अतिरिक्त विभिन्न सम्पर्क कार्यलहरूले योग-शिविर, भजन-कीर्तन, हाजिरी जवाफ, वक्तृत्वकला, ध्यान, आध्यात्मिक भ्रमण आदि कार्यक्रमलगायत आध्यात्मिक एवं सामाजिक चेतनामूलक कार्यक्रमहरू सफलतापूर्वक संचालन गर्ने सौभाग्य पाए ।

अन्त्यमा, गत वर्ष २०६४ सालमा सिशके ले आफ्नो यात्रालाई चौतर्फीरूपबाट विकास र विस्तार गर्न सफल भयो। विभिन्न आरोह-अवरोह, संघर्ष र चुनौतीहरूका बावजूद पनि आफ्ना आध्यात्मिक गतिविधिमार्फत् गत वर्षलाई ऐतिहासिक एवं स्मरणयोग्य वर्ष बनाउन

**नववर्ष २०६५ को पुनीत अवसरमा समस्त साधक साधिकाहरूमा हार्दिक मंगलमय शुभकामना !**
**साथै परमपूज्य सद्‌गुरूदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको ७५ औं अवतरण दिवसको पावन अवसर तथा विन्ध्यवासिनी आरती संचालन केन्द्र प्रस्तावित सम्पर्क कार्यालयबाट यही वैशाख १ गतेबाट सम्पर्क कार्यालयमा रूपान्तरण भएकोमा परमपूज्य सद्‌गुरूदेवहरूमा सभक्ति कृतज्ञता ज्ञापन गर्दै सम्पूर्ण साधक-साधिका र कार्यकर्ताहरूमा बधाई ज्ञापन गर्दछौं ।**

## सिद्धाश्रम शक्ति केन्द्र

| सम्पर्क कार्यालय | सम्पर्क कार्यालय | सम्पर्क कार्यालय |
|---|---|---|
| लेखनाथ, पोखरा | रामघाट, पोखरा | विन्ध्यवासिनी, पोखरा |

## ाघ २३–फाल्गुण ८ गते)

सावर पन्थी नं. १ र २ रुसका लागि नेपालका राजदूत सूर्यकिरण गुरुङ तथा अन्य महानुभावहरू

रुसको भ्रमण सम्पन्न गरी फर्कँदै सावर पन्थी सदस्यज्यूहरू त्रि.अ.विमानस्थलमा

गत माघ २३ गतेदेखि चैत्र ८ गतेसम्म सावरपन्थी सदस्य नं. १ र २ ज्यूले रुसको संस्थागत भ्रमण गर्नुभएको थियो । संस्थालाई अन्तर्राष्ट्रियरूपमा चिनाउने अवसरको रूपमा लिइएको उक्त भ्रमण अवधिमा भौतिक रूपले समुन्नत युरोपेली राष्ट्र रुसमा तान्त्रोक्त शिव साधना सम्पन्न हुनुका साथै तान्त्रोक्त ध्यानका कक्षाहरू पनि सम्पन्न गरिएका थिए। उक्त अवधिमा रुसबाट प्रकाशित हुने लोकप्रिय पत्रिकामा सावरपन्थी नं. १ ज्यूसँगको अन्तर्वार्ता प्रकाशित गरिएको थियो (देब्रेपट्टिको तस्वीर) ।

# श्री गोरख महापुराण

**परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ। यसबाट परमपूज्य सद्गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ। यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो। यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल, गोर्खा) स्वयंको नै हुनेछ।**

### चवालीसौं भाग

हस्तिनापुर दरवारको भव्यता देखेर पनि गांधारी र उनका भाइ शकुनीलाई कुनै खुशी भएन। यसको विपरीत लाखौँ गुणा दुःख ती दुवै भाइ-बहिनीलाई तब भयो जब उनीहरूले बुझे– भीष्म ब्रह्मचारीले ठूलो धोका दिएछन्। यिनले त पिताज्यूसँग भनेका थिए– मेरो भतिज अन्धो भए पनि चक्रवर्ती नरेश हो। तर यहाँ त महाराज पांडु राजा छन्, बहिनी-ज्वाइँ राजा होइनन्। विचरा शकुनीमा यो सामर्थ्य कहाँ थियो कि उसले भीष्मलाई भनोस्– तपाईंले मेरो पितासँग किन कपट गर्नुभएको थियो ?

सही कुरा त यो थियो कि आफ्नो भाइको दुःखले भरिएको कुरा सुनेर र सम्झेर गांधारीले त्यसै समय आफ्नो आँखामा पट्टि बाँधिन् र भनिन्– यस्ता धूर्तको अनुहार म जीवनभरि हेर्ने छैन र शकुनीसँग भनिन्– भाइ ! अब तिमी यहीं बस, यहाँ मेरो कोही त हुनुपर्छ। म यी धोकेबाज धूर्तहरूको अनुहार नै नहेरी भगवान्सँग यसरी नित्य नियमका साथ प्रार्थना गर्नेछु– हे अनाथहरूका नाथ ! यी धोकेबाजहरूको जति सकिन्छ चाँडै सत्यानाश गरिदिनुहोस्। म अनाथ अबलाको जीवन नाउको खेवनाहार ! तपाईंबाहेक अरू मेरो को छ र ? गांधारीको दुःखले भरिएको विचारबाट द्रवित भएर शकुनीले भने– तिम्रो जुन विचार छ, मेरो पनि त्यही छ। शकुनीले गांधारीलाई भने– म पहिले कुनै उपायबाट राजा पांडुलाई मराएर बहिनी-ज्वाइँलाई राजा बनाउनेछु र तिमीलाई पटरानी। यसपछि यस्तो उपाय गर्नेछु यी मानिस आपसमा नै लडेर मरुन्, चाहे मलाई पनि यिनको काटामारीमा किन मर्न नपरोस्। तर यी दुष्टको अस्तित्वलाई समाप्त गरेर छोड्नेछु। आफ्नो भाइको विचार सुनेर गांधारीलाई केही सान्त्वना मिल्यो।

प्यारा वन्धुहरू ! महाभारतमाथि टीका लेख्नेहरू शकुनीलाई छली, कपटी र महाधूर्त लेख्दछन् र वास्तविकतामा पर्दा हालिरहेका छन्। आफै राम्ररी विचार गर्नुहोस् कि भीष्मपितामह कति दोषी छन् ? गांधार राजकुमार शकुनीको कति दोष छ ? हे मित्र हो ! जसमाथि कसैले विना कारण बलमिच्याइँ गर्दछ, ऊ यसप्रकार आफ्नो दुश्मनको नाश गर्दछ र आफूमाथि भएको बलमिच्याइको बदला लिन्छ त के त्यसलाई अन्याय भनेर लेख्नु उचित छ ?

यस प्रकार हाम्रा सबै ऐतिहासिक ग्रन्थहरूलाई मनोमानी ढंगबाट बिगारिएको छ। भगवान् श्रीकृष्ण पनि महायोगी र ब्रह्मचारी हुनुहुन्थ्यो। उहाँको विवाह केवल रुक्मिणीका साथ भएको थियो। उहाँले आफ्नो जीवनमा एकपटक मात्र भोग गरेर एक मात्र संतान उत्पन्न गर्नुभएको थियो जो राजकुमार प्रद्युम्नको नामबाट विख्यात् छ। तपाईं नै भन्नुहोस्– हाम्रा वाममार्गी ग्रन्थकारहरूले भगवान्

श्रीकृष्णका अनगिन्ती रानीहरूका बारेमा ग्रन्थमा लेखेका छन्, ती सबै के कपोलकल्पित होइनन् ?

अरे मेरा सोझा मित्रहरू हो ! यदि योगीराज श्रीकृष्णले बहुविवाह गर्नुभएको भए त उनका रानीहरूका संतानहरू पनि हुन्थे र ती संतानहरूको नाम पनि त हुन्थ्यो, उनले गरेका ठूला कर्महरूका पनि गाथा हुन्थ्यो । अय्यासी राजा, महाराजाहरूले पंडितहरूलाई धन दिएर यस प्रकारका ग्रन्थ बनाउन लगाएका हुन् जसबाट उनीहरूलाई आफ्ना महल रानीहरूबाट भर्नका लागि सुविधा होस् । श्रीकृष्ण भगवान्ले एघार-बाह्र वर्षको उमेरमा नै वृन्दावन छोड्नुभएको थियो । वृन्दावनका गोपीहरू सबै उनका काकी, फुपू, दिदी, बहिनी आदि थिए जो श्रीकृष्णको नटखट स्वभाव, बाललीलाहरू देखेर आफै पनि उहाँका साथ आनन्द लिने गर्दथे । यसैलाई अहिले रासलीला भनिन्छ । राधा पनि टाढाको नातामा श्रीकृष्णकी मामी थिइन् जो वृषभानुकी पुत्री हुन् र दुष्ट कंसलाई मार्नमा श्रीकृष्णको सत्याग्रहमा राधाले पूरा सहयोग गर्नुभएको थियो जसको प्रसंग यसप्रकार छ– श्रीकृष्णले दुष्ट कंस राजालाई नाश गर्नको लागि एउटा ग्वालबाल दलको स्थापना गर्नुभएको थियो र त्यसको नेतृत्व आफैले गर्नुहुन्थ्यो ।

भगवान् श्रीकृष्णले भन्नुभयो– भाइ हो ! राजा कंसले राक्षस पठाएर अत्यन्तै निर्दयताका साथ व्रजका सैकडौं बच्चाहरूको बध गरायो । त्यसको बलमिच्याइलाई रोक्ने सरल उपाय यो हो कि व्रजबाट घिउ, दूधको बिक्री मथुराको लागि बिल्कुलै बन्द गर्नुपर्छ । हामी धनले के गर्छौं र ? कपडा यहाँ नै बुनिन्छ, खेतीद्वारा अनाज हाम्रा खेतहरूमा नै उत्पन्न हुन्छ, घिउ, दूध, मखन गाई भैंसी दिन्छन् । यदि हाम्रा आमा-बहिनीहरूले गहना आभूषण लगाउने इच्छालाई केही दिनका लागि छोड्नुहुन्छ भने हामी घिउ, दूध, मखन खाएर, व्यायाम गरेर चाँडै नै बलवान् बन्नेछौं । तब हामीलाई सताउने कुनै पनि दुष्टको हिम्मत हुनेछैन । मेरो कुरा ठीक ठान्नेहरूले हात उठाउनू र जो जसलाई मेरो कुरा ठीक लागेन, उनीहरूले विरोध प्रकट गर्न सक्नेछन् । सबै नवयुवाहरूले श्रीकृष्ण भगवान्को पक्षमा आफ्नो हात उठाएर भने– कन्हैयाको प्रस्ताव हामी सबैलाई स्वीकार छ र आजबाट मथुरामा घिउ, दूध, मखन बेच्न कोही जाने छैन ।

हाम्रा माता, बहिनीहरू जसले हामीलाई आजसम्म मोही मात्र पिलाएर दूध, घिउ सबै मथुराका राक्षसहरूको हातमा बेचेर हामीलाई कमजोर बनाउँदै रहे । भोलिदेखि ग्वालबाल दलले मन लागेर वा नलागेर जसरी पनि घिउ, दूध बेच्नबाट उनीहरूलाई रोक्नेछ ।

केही ठूला पाकाहरूले यस कुराको विरोध पनि गरे । सर्वप्रथम नन्दबाबाले विरोध प्रकट गर्नुभयो– कृष्ण तँ उत्ताउलो भएको छस्, राजाको सामना कसले गर्न सक्छ ? राजा भगवान्को स्वरूप हुन्छ । राजाको आज्ञा मान्नुमा नै हाम्रो भलो छ । कृष्ण अहिले तिमी बालकै छौ । अहिल्यै राजनीतिको दाउपेच के सम्झन सक्छौ ? भगवान् कृष्णले उत्तर दिनुभयो– बाबा ! राजा जनताको पिता हुन्छ । यो हामी राम्ररी जान्दछौं । यदि जाली राजा, जो बिना कसूर नै जनतालाई सताउँछ, त्यसलाई बदल्नु जनताको कर्तव्य हुन जान्छ । बिना त्याग केही पनि हुँदैन । बिना मेहनत त भगवान् रोटी पनि दिनुहुन्न । तपाईं बसी-बसी तमाशा हेर्नुहोस् कि भोलिबाट हाम्रो ग्वालबाल दलको कार्य कसरी सफल हुन्छ । हाम्रो सत्याग्रहको कसरी जीत हुन्छ । भरिभराउ पंचायतमा जनताले नारा लगाए– जय होस् कन्हैया लालको । भोलिदेखि नै सबै ग्वालबाल दल कन्हैयाले भने अनुसार कार्य गर्नेछ । जो नवयुवाहरूलाई हाम्रो ग्वालबाल दलमा नाम लेखाउनु छ, उसले पछि लेखाउन सक्छ । हाम्रो ग्वालबाल दलमा व्रजभरिका कार्यकर्ता, नरनारी पनि आ-आफ्नो नाम लेखाउन सक्छन् । क्रमशः ।

हरि ॐ तत्सत् ।

**महाभारतमाथि टीका लेख्नेहरू शकुनीलाई छली, कपटी र महाधूर्त लेख्दछन् र वास्तविकतामा पर्दा हानिरहेका छन् । आफै राम्ररी विचार गर्नुहोस् कि भीष्मपितामह कति दोषी छन् ? गांधार राजकुमार शकुनीको कति दोष छ ? हे मित्र हो ! जसमाथि कसैले विना कारण बलमिच्याइँ गर्दछ, ऊ यसप्रकार आफ्नो दुश्मनको नाश गर्दछ र आफूमाथि भएको बलमिच्याइको बदला लिन्छ त के त्यसलाई अन्याय भनेर लेख्नु उचित छ ?**

*यस स्तम्भअन्तर्गत हामीले सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'सूली ऊपर सेज पिया की' विषयको प्रवचनलाई 'गुरु र शिष्य' शीर्षकमा प्रकाशन गरिएको छ ।*

# गुरु र शिष्य

सेवा र श्रद्धा यदि तिमी अर्पण गर्छौ भने त्यसको ऋण गुरुले आफूमाथि कहिल्यै पनि थोपर्नुहुन्न । कुनै पनि गुरुले यसो गर्नुहुन्न यदि उहाँले मुक्ति वा मोक्ष चाहनुहुन्छ भने । जब शिष्यमा साधनाका केही ज्ञान आउन थाल्छन् तब उसमा केही अहंका प्रवृत्ति पनि आउन थाल्छ जुन उसको दुर्गुण हो । दुर्गुण त्यसकारण हो कि उसको शरीरमा खराब रगत छ जसलाई हटाउन सकिँदैन । मैले पहिले एउटा उदाहरण दिएको थिएँ– कामुक व्यक्तिले हरेक क्षण चित्रमा पनि कामुकता देख्नेछ किनकि उसको वृत्ति नै कामुकतापूर्ण छ । उसमा भएको कामुकता उसको जीवनको होइन भने पनि उसको पिताको जीवनबाट प्राप्त भएको हुन सक्छ । पिताको जीवनबाट होइन भने हजूरबुबाको जीवनबाट प्राप्त भएको हुन सक्छ । कैयौं पिँढी हुँदै उसमा रगत आएको छ । यहाँसम्म कि 'वशिष्ठ गोत्रोत्पन्नोहम्' दस हजार वर्ष पहिले जो मेरा पूर्वज हुनुहुन्थ्यो, म उहाँको हुँ, उहाँकै भाग्यबाट तिमी आएका

छौ....यसबीचमा रगत कहाँनिर खराब भयो ? रगत त तिमीभित्र छ नै, यसलाई गुरुले मात्र शुद्धता दिन सक्छन्... तब तिमीले आफूमाथि गुरुको रङ चढ्न देऊ । चढ्न नै दिँदैनौ भने गुरुले के गर्नु हुन्छ र ?

गुरुले केही पनि गर्नुहुन्न, गुरु त गर्न पनि सक्नुहुन्न । समुद्र आफै गंगोत्रीसँग मिल्न आउँदैन । गंगोत्रीबाट गंगा आफै समुद्रसम्म बग्दछिन् । त्यस गंगालाई जानु छ समुद्रसम्म । यदि गंगा जाँदैन भने बीचमा सुक्दछ । त्यसबेला पनि समुद्र आफ्नो स्थानमा नै स्थिर रहन्छ । यदि आफ्नो रगतलाई पूर्णरूपमा शुद्ध गर्नुछ र तिमी तयार छौ भने त तिम्रा लागि बाटो पनि छ– सेवा, समर्पण र श्रद्धा.. यी तीन कुरा नै ती महत्त्वपूर्ण कुरा हुन् जसको माध्यमबाट तिमी आफ्नो रगतलाई शुद्ध गर्न सक्छौ ।

र, जबसम्म यो पात्रता हुँदैन तबसम्म पात्रलाई साधना त प्राप्त हुन्छ साथै उसमा 'म पनि केही हुँ' भन्ने अहं पनि आउँछ । यो अहं गल्दैन । जुन दिन अहं गल्छ त्यस दिन पूर्णता प्राप्त हुन्छ ।

म तिमीसँग तिमीले जस्तै कुरा गर्दछु, पत्नीसँग पत्नीलाई जस्तै गरेर कुरा गर्दछु । एउटै व्यक्ति पच्चीस किसिमबाट जीवन जिउन सक्दछ । आफ्नी पत्नीसँग एडजष्ट हुन सक्दैन, छोराहरूसँग मिल्न सक्दैन, गाली दिइरहन्छ भने लडाइँ-झगडा त चलिरहने नै भयो । घर-घरमा यो लडाइँ-झगडा, यो तनाव... तिनीहरूको रगत यस्तो प्रकारको छ, तिम्रो रगत बेग्लै प्रकारको छ । तिमीले बेग्लै बाटो अपनाएका छौ, तिमी त्यस घुम्तीमा उभिएका छौ जुन दिव्यताको घुम्ती हो, जुन आफैमा पूर्णताको घुम्ती हो ।

यो अहं पादपद्ममा उत्पन्न भयो किनकि उसको रगतलाई शंकराचार्यले शुद्ध गर्न पाएनन् । शंकराचार्यको सबैभन्दा ठूलो गल्ती थियो त्यो । शंकराचार्यको सबैभन्दा ठूलो न्यूनता नै त्यही थियो आफ्ना शिष्यलाई पूरा भरोसा गर्नु । श्रद्धा गर्नुपर्दथ्यो शिष्यलाई गुरूप्रति । यहाँ त गल्ती भयो– गुरुले शिष्यप्रति श्रद्धा गरे । शंकराचार्यले यस गल्तीको सजायँ पनि भोग्नुपर्‍यो ।

केवल शंकराचार्यलाई मात्र होइन, आउने पिँढी र हामीले पनि सजायँ भोग्न पर्‍यो... बत्तीस वर्षको उमेरमा नै शंकराचार्यको देहान्त भयो– देहान्त त्यसैले भयो किनकि पादपद्ममा यो अहं आएको थियो कि शंकराचार्य जबसम्म जीवित रहन्छन् तबसम्म मानिसहरूले उसलाई पूज्दैन... यदि पादपद्ममा श्रद्धा भइदिएको भए यो घटना घट्ने थिएन । त्यसैले त्यस ईर्ष्या, त्यस अहंको तुष्टिका लागि पनि उसले दूधमा विषलाई मिलाएर शंकराचार्यलाई पिलाए...र बत्तीस वर्षको अल्पावधिमा नै शंकराचार्यले समाप्त हुनुपर्‍यो ।

धेरै छोटो उमेरमा नै ईसा मसीहले सूलीमा चढ्नुपर्‍यो– आफ्नो शिष्यको कारणले गर्दा । लुकेर बसेका ईसा मसीहका शिष्यले राजालाई लुकेको ठाउँ देखाइदिए । शिष्यले गद्दारी गर्‍यो किनकि ईसाले गल्ती गरे । त्यो गल्ती यसकारण हुन गयो कि हाम्रो दर्शनको आधार क्षमा हुन गयो, हाम्रो दर्शनको आधार विश्वास हुन गयो, हाम्रा वेद, शास्त्रले वीरहरूको आभूषण क्षमा हो भनेका छन् । मलाई लाग्दछ कि वीरहरूको सबैभन्दा ठूलो पाप नै क्षमा हो, सबैभन्दा ठूलो अपराध नै क्षमा हो । क्रमश: ।

जय गुरुदेव !

नववर्ष २०६५, परम्पूज्य सद्गुरूदेवको ७५ औं अवतरण दिवस, सिद्धाश्रम शक्ति केन्द्रको नवौं वार्षिकोत्सव, गोरक्ष प्रकट दिवस, २०६५ तथा गुरूसेवा दल नं. ४ की साधिका विन्देश्वरी बरालज्यू सावर मातृकाजस्तो गरिमामय स्थानमा प्रवेश गर्नुभएको यस सुखद अवसरमा समस्त ब्रह्माण्ड जगतमा रहेका समस्त प्राणी जगत् र मानवजातिमा रहेका समस्त प्रकारका दु:ख, कष्ट र पीडा, अभाव, भय, अज्ञानतारूपी अन्धकार हटेर जाओस् दिव्यतम ज्ञानको ज्योति प्राप्त गरी दिव्य शक्ति प्राप्त गर्दै यहाँको जीवनमा उत्तरोत्तर प्रगति, सुख, शान्ति, समृद्धि र दीर्घायुको कामना गर्दछौं । साथै, गोरक्ष निखिल युग ल्याउने महान योजना द्रुतगतिमा अघि बढोस् भनी श्री श्री महायोगी गुरू गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज, गुरूमाता तथा समस्त तेत्तीसकोटी देवीदेवताहरूसँग प्रार्थना गर्दछौं ।

श्री खगराज बराल, रामबजार-१५
श्री भरत गिरी, सिर्जना चोक-८
श्री अमित न्यौपाने, विन्ध्यवासिनी-२
श्रीमती मीरा तुलाचन, नागढुङ्गा-९
श्री बसन्त बराल, रामबजार-१५
सुश्री कृष्णा गुरुङ्ग, न.पा. पछाडि -८
सुश्री शुसीला पहारी, बैदाम-६
श्री बाबुराम पौडेल, वनक्याम्पस गेट-१५

श्रीमती जानकी के.सी., सिर्जनाचोक-८
श्रीमती हरिमाया गहतराज, अर्चलबोट-२
श्रीमती दुर्गा तिमिल्सिना, बैदाम-६
श्री हिमाल भवानी जोशी, भिमसेनटोल-३
श्रीमती शुसीला बोगटी, बैदाम-६
श्रीमती धनकुमारी तिमिल्सिना, मासबार-७
श्रीमती शारदा कुँवर, सिर्जनाचोक-८
श्री ध्रुव रायमाझी, कुँडहर-१२

श्रीमती इन्दिरा सापकोटा, बैदाम-६
श्रीमती हरिप्रिया पौडेल, अर्घौं
श्री बलराम पौडेल, अर्घौं
श्री टेकनाथ गौतम, बेगनास
सुश्री तुलसी थापा, सिमलबोट-१५
श्रीमती हरिमाया के.सी., मासवार-७
श्री दिपक पराजुली, विन्ध्यवासिनी-२
श्रीमती शुसीला तत्ज्या, सिर्जनाचोक-८

श्रीमती लक्ष्मी कुँवर, बास्तोलाथर-९
श्रीमती सविना कुँवर, सिर्जनाचोक-८
श्रीमती विष्णुमाया बराल, रामबजार-१५
श्री हरिकृष्ण बराल, मासबार-७
श्री शिवराज गिरी, सिमलचौर-८
सुश्री प्रमिला पराजुली, मासबार-७
श्रीमान गोपाल सापकोटा, बच्छिबुढुवा-१५
श्री केदार बराल, रामबजार-१५
श्री इश्वर थापा, रामबजार-१५

" सफा स्वच्छ वातावरणमा बाँच्न पाउनु प्रत्येक व्यक्तिको नैसर्गिक अधिकार हो"

सद्गुरूदेवद्वय श्री श्री महायोगी गुरू गोरखनाथ परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको करूणामय दृष्टि हामी नेपाली माथि सदा रहोस । नव वर्ष २०६५ सम्पूर्ण नेपालीहरूका लागि सुख, समृद्धिको बाहक बनोस् यही नै हार्दिक मंगलमय शुभकामना ।

**महेश न्यौपाने**
(अध्यक्ष)
एवं वातावरण संरक्षण मञ्च परिवार, भक्तपुर

**नयाँ वर्ष २०६५ सालको उपलक्ष्यमा सम्पूर्ण देशवासी महानुभावहरूमा सुख, शान्ति एवं समृद्धिको मंगलमय शुभकामना व्यक्त गर्दछौं । साथै**

**रामकृष्ण न्यौपाने**
अध्यक्ष
तथा सम्पूर्ण गाविस कार्यालय,
दुवाकोट परिवार

घर निर्माण गर्दा नेपाल सरकारले तोकेको मापदण्डमा रहेर कार्य गर्नहुन अनुरोध गर्दछौं ।

**नव वर्ष २०६५ सालको सुखद उपलक्ष्यमा समस्त देशवासीको सुख, शान्ति र समृद्धिको कामना गर्दछौं ।**

**नेपाल लेखापढी कानून व्यवसायी एसोसिएसन,**
**जिल्ला समिति**
**लगनखेल, ललितपुर**

नयाँ वर्ष २०६५ सालको आगमनको शुभ अवसरमा सम्पूर्ण देशवासीहरूमा सुख समृद्धि र सुस्वास्थ्यको कामना गर्दछौं ।

**सोहनकुमार खड्का**
तथा
**समन्वय ल. फर्म परिवार**
लगनखेल, ललितपुर

नयाँ वर्ष २०६५ सालको सुखद उपलक्ष्यमा देश विदेशमा रहनुभएका समस्त देशवासीमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**S. N. Group**
Govt. Licence No. : 490/061/062
Samakhushi, Ktm. Nepal
Tel: 4354467, 016914577, 016914686
Fax: 4382413
E-mail: mahatosuresh@yahoo.com
Website: www.snmanpower.com

**नववर्ष २०६५ सालको पावन अवसरमा समस्त देशवासीमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।**

**निखिल खाद्य भण्डार**
सिनामंगल, काठमाडौं

**सर्व सुलभ सामान तथा खाद्यान्नका लागि**
**निखिल खाद्य भण्डार**
**तपाईंहरूको हार्दिक स्वागत गर्दछ ।**

नयाँ वर्ष २०६५ सालको पावन अवसरमा हाम्रा समस्त ग्राहकवर्ग, शुभचिन्तक महानुभावहरू एवं हितैषीहरूमा हार्दिक **मंगलमय शुभकामना** व्यक्त गर्दछौं ।

**MENAKA ENTERPRISES (P.) LTD.**
P. O. Box: 23254, Thapathali, Bagmati Bridge
Tel. 4260674 (Off.) Fax: 4268294, Mobile: 98510 36917
E-mail: menaka@ntc.net.np

"Enlightenment and Development through faith, prayer and labour"

**MOUNT OLIVES HIGH SCHOOL**
*A progrressive, reputed co-educational english medium high school*

**Admission for New Academic Session 2065 from Nursery to Standard VIII has begun from 17th Falgun 2064**
- Registration forms and other information on admission are now available at the school.
- The fee structure has been made reasonable and competitive
- Admission will be on merit basis only - Highly qualified, committed and experienced teachers
- Spacious, well ventilated and furnissed class rooms - Outstanding S.L.C. Board Performance
- Learning through Audio Visual Equipments
- Providing library books for extra developing, extra knowledge on subjects likes computer science, math, EPH etc.
- Transportation available within city area - Computer classes from the standard V
- Hostel in Homely atmosphere - Extra coaching class
- Providing extra-co curricular activities for harmonious development of your Children such as marshal arts, dance, music, yoga etc.
- Excurtion field visit on the vaiours subjets like social studies and environment sciene.

*For details, please contact:*
**Mount Olives High School, Sinamangal, Kathmandu**
Phone No.: 4473913

**साधनात्मक आँधीबेहरी ल्याऔं ।**
**गोरक्ष निखिल शक्ति जगाऔं ।।**

**(सिद्धाश्रम शक्ति केन्द्रसँग आबद्ध भएर परमपूज्य सद्गुरुदेवहरूको कृपा, अनुकम्पास्वरूप साधक साधिकालगायत अन्य महानुभावहरूले आफ्ना जीवनमा पाउनुभएका विविध प्रकार र प्रकृतिका अनुभव/अनुभूतिहरू यस पत्रिकामा स्थायी स्तम्भअन्तर्गत प्रकाशित हुँदै आइरहेका छन् । सिद्धाश्रम शक्ति केन्द्रसँग जोडिएपछि यहाँहरूले सङ्गाल्ने सौभाग्य पाउनुभएको खण्डमा ती अनुभव/अनुभूतिहरूलाई पनि यस पत्रिकामा प्रकाशनार्थ उपलब्ध गराउन सक्नुहुनेछ, स्वीकृत भएमा मात्र छापिनेछ ।)**

# अप्रेशन गर्नु परेन...

मेरो नाम लक्ष्मी गुरागाईं हो । म यस आश्रममा जोडिएको २०६१ साल असारमा हो । यस आश्रमको बारेमा शुरुमा मैले बहिनीबाट थाहा पाएकी थिएँ । आश्रमबाट प्रसारण हुने गोरक्ष निखिल सन्देश बेला बेलामा सुनिरहे पनि मलाई आश्रमप्रति विश्वास भने थिएन । शुरुमा त आश्रमका गतिविधिहरू टुनामुना जस्ता लाग्दथे । बहिनीलाई पनि आश्रम जानबाट रोक्दथें । आश्रम जानुपर्दछ भन्ने अन्तप्रेरणा एकदिन मलाई प्राप्त भयो ।

भोलिपल्ट दिव्य गुरु महोत्सव थियो । मलाई जाऊँ जाऊँ लाग्यो । तर मैले आश्रम देखेकी थिइन । बहिनीलाई लगिदेऊ भन्ने आँट गर्न सकिन किनकि आश्रम जानबाट बहिनीलाई मैले धेरै पटक रोकेकी थिएँ । दिव्य गुरु महोत्सवमा बहिनी स्वयंले जाऔं भनोस् भन्ने लागिरह्यो ।

त्यस दिन कलेज पनि नगइकन, खाना पनि नपकाइकन बसिरहें । साहस गरेर बहिनीलाई सोधें– 'आश्रम कतिखेर जान्छेस् ?' बहिनीले तपाईं पनि जाने हो भनेर सोद्धा मलाई अत्यन्तै खुशी लागेको थियो । आश्रम पुगेकै दिन कार्यकर्ताहरूबाट गुरुकार्यबारे थाहा पाएँ । त्यसको भोलिपल्ट त्यतिबेला बत्तीसपुतलीमा रहेको आश्रममा पुगें । दिनभरि आश्रममा बसेर आरतीमा भाग लिएँ । त्यसपछि लगातार आश्रम जाने क्रम बन्यो । मैले साधनामा पनि भाग लिएँ । साधनाको क्रममा पनि अनुभव/अनुभूति गर्ने मौका प्राप्त भयो । मैले गुरु कार्य पनि गर्दै गएँ । पछि तालिम लिने सौभाग्य पनि प्राप्त भयो ।

मेरो घाँटीसम्बन्धी रोग थियो । जति जँचाउँदा पनि के रोग भन्ने पत्ता लाग्न सकेको थिएन । घाँटीमा केही अड्केको जस्तो लागिरहन्थ्यो । धेरै पैसा खर्च भइसकेको थियो । यस समस्याबाट मेरो पढाउने कार्यमा पनि बाधा पर्न थाल्यो । म बोल्नै नसक्ने थिएँ । त्यसैले पढाउन जान पनि छोडिदिएँ । मानिसहरूसँग भेट नभइदिए, बोल्न नपरे हुन्थ्यो जस्तो लागिरहन्थ्यो । डाक्टरबाट 'ट्यूमरजस्तो छ, अप्रेशन गर्नुपर्छ' भन्ने सुझाव पनि आएको थियो ।

आश्रममा हिलिङ्गको व्यवस्था हुँदाहुँदै पनि मैले आफ्नो घाँटीको रोगलाई गुरुकार्य गरेर नै ठीक गर्ने विचार गरें । मैले लगातार करिब एक वर्षसम्म गुरुकार्य गरें । घाँटीको समस्या आश्चर्यजनकरूपमा हरायो । परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पाबाट अहिले मेरो जीवनयापन सहज र आनन्दित भइरहेको छ ।

# आफ्नो हात आफैं हेरौं

यस स्तम्भअन्तर्गत परमपूज्य सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले लेख्नुभएका हस्तरेखा सम्बन्धी पुस्तकबाट विभिन्न रोचक तथ्यहरूलाई क्रमशः प्रकाशित गर्दै लगिएको छ । आशा छ, यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।

## बूढी औंलाका तीन भाग

ध्यानपूर्वक हेर्दा थाहा हुन्छ– बूढी औंला मुख्य गरी तीन भागमा बाँडिएको हुन्छ । नङसँग टाँसिएको भाग पहिलो हो, दोस्रो मध्य भाग र तेस्रो भाग भनेको हातमा शुक्र पर्वतसँग जोडिएको हुन्छ । हस्तरेखा विज्ञानका अनुसार यिनमा प्रथम भाग सत्, दोस्रो रज र तेस्रो भागलाई तमको रूपमा लिइन्छ । यसलाई ऊर्ध्वभाग, मध्यभाग तथा अधोभाग भनेर पनि चिन्न सकिन्छ । ऊर्ध्वभाग विज्ञान र इच्छाशक्तिको द्योतक, मध्यभाग तर्क एवं विचारको प्रतिनिधित्व गर्दछ भने तेस्रो अधोभागले प्रेम, विराग र स्नेहलाई सूचित गर्दछ ।

**प्रथम भाग**

जुन मनुष्यको बूढी औंलाको प्रथम भाग दोस्रो भागभन्दा लामो छ, त्यस व्यक्तिमा इच्छाशक्ति प्रबल हुन्छ तथा निर्णय लिनमा त्यो स्वतन्त्र हुन्छ । यस्तो व्यक्तिले कसैको अधीनमा रहेर काम गर्न सक्दैन । यस्तो व्यक्ति धार्मिक विचारका र यसमा गहिरो आस्था राख्ने हुन्छ । यस्तो व्यक्तिको व्यक्तित्वको प्रभाव अरूलाई तुरुन्तै पर्दछ । यस्तो व्यक्ति आफ्नो व्यक्तित्वको बलमा जुन कार्य पनि सम्पन्न गर्न समर्थ हुन्छ र यौवनकालमा भन्दा वृद्धावस्थामा यस्तो व्यक्ति अधिक संवेदनशील तथा धेरै सुखी देखिन्छ ।

यदि पहिलो तथा दोस्रो भाग बराबर मात्रामा लामो एवं मोटो हुन्छ भने यस्तो व्यक्ति समाजमा सम्मानित स्थान प्राप्त गर्न सफल हुन्छ । न त यस्तो व्यक्तिले कसैलाई धोका दिन्छ, न त कसैबाट सजिलै धोका खान्छ । यस्तो व्यक्तिको जीवनमा मित्रहरूको संख्या धेरै हुन्छन् तथा समाजमा यस्तो व्यक्ति लोकप्रिय हुन्छ । कठिनभन्दा कठिन परिस्थितिहरूमा पनि यस्तो व्यक्तिलाई हँसिलो अवस्थामा देख्न सकिन्छ ।

**दोस्रो भाग**

औंलाको दोस्रो भाग तर्क शक्तिको स्थान मानिन्छ । यदि दोस्रो भाग पहिलो भागभन्दा ठूलो र मजबूत छ भने यसबाट यो सिद्ध हुन्छ कि व्यक्तिमा तर्क शक्ति आवश्यकताभन्दा धेरै छ । यस्तो व्यक्तिको यस्तो विशेषता हुन्छ कि आफ्नो तर्क शक्तिको सामुन्ने कसैलाई पनि टिक्न दिँदैन । तर यस्तो प्रकारको व्यक्तिमा एउटा कमजोरी यो हुन्छ कि आफ्ना उचित तथा अनुचित सबै कुरालाई तर्क शक्तिको सहयोगबाट मनाउने कोशिस गर्दछ । यदि तर्क शक्तिमा आफ्नो स्थिति कमजोर भएको देख्छ भने हल्ला मच्चाएर भए पनि आफ्नो विजय सिद्ध गर्ने प्रयत्न गर्दछ । सभ्य समाजमा यस्तो व्यक्तिलाई धेरै आदर प्राप्त हुँदैन । समाजले त यस्तो व्यक्तिलाई बकवास गर्ने र वाचाल ठान्दछ । यदि कुनै व्यक्तिको हातमा यो भाग पातलो छ भने यस्तो व्यक्ति आफ्नो दिमागले काम नलिई जे मनमा आउँछ, मुख फोडेर भन्दछ । यस्तो व्यक्ति आफ्ना अधिकारीहरूको गल्ती निकाल्नमा तत्पर रहन्छ । यस्तो व्यक्तिको जीवन भारवत् हुन्छ ।

यदि बूढी औलाका पहिलो र दोस्रो भाग लम्बाई, मोटाई र चौडाई बराबर हुने गरी

रहेको छ भने व्यक्ति शान्त मस्तिष्क भएको मानिन्छ। न त यस्तो व्यक्ति क्षणिक आवेशमा क्रोधित हुन्छ, न त क्षणिक प्रशंसाबाट फुल्दछ। जीवनमा प्रत्येक पाइला सावधानीका साथ चाल्ने हुन्छ जसबाट यस्तो व्यक्ति समाजबाट कम मात्रै धोका खान्छ । यस्तो व्यक्तिमा आत्मविश्वास पनि प्रबलरूपमा रहेको पाइन्छ । सही शब्दमा भन्ने हो भने यस्तो व्यक्ति सभ्य, उच्चस्तरको व्यापारी, महत्त्वपूर्ण पदमा आसीन पदाधिकारी र कहलिएका कलाकार हुन्छ ।

यदि पहिलो भागभन्दा दोस्रो भाग कमजोर, पातलो र दुर्बल छ भने यस्तो व्यक्ति आफ्नो इच्छानुसार नहिँडी अरूको अधीनतामा हिँड्न मन पराउँछ । सही अर्थमा भन्ने हो भने यस्तो व्यक्ति स्वयं निर्णय गर्दैन । जीवनमा यस्तो व्यक्ति कुनै पनि प्रकारको कार्य बिना योजना नै गर्दछ जसबाट कार्यको अन्तमा यस्तो व्यक्तिलाई असफलता मात्र प्राप्त हुन्छ । यस्तो व्यक्तिको आत्मविश्वास निर्बल हुन्छ । यस्तो व्यक्तिको विचार अस्थिर हुन्छ र यस्तोको प्रकृति झगडालु हुन्छ । जीवनमा यस्तो व्यक्ति एउटा असफल व्यक्ति कहलिन्छ। वास्तवमा नै यस्तो व्यक्ति भाग्यवादी हुनुका साथसाथै अल्छी कहलिन्छ ।

**तेस्रो भाग**

बूढी औंलाको तेस्रो भागलाई 'भाग' नभनी यसलाई शुक्रको स्थान मानिन्छ। शुक्र पर्वतको बारेमा पछि वर्णन हुनेछ ।

प्रथम दुई भागको अपेक्षा यो भाग निश्चय नै उन्नत, सुदृढ र सुन्दर हुन्छ। यदि यो भाग सामान्यरूपबाट अधिक माथि उठेको छ भने, सुन्दर र केही गुलाबी आभायुक्त छ भने यस्तो व्यक्ति प्रेम र स्नेहको क्षेत्रमा धेरै माथिल्लो हुन्छ। समाजमा यस्तो व्यक्ति आदर प्राप्त गर्दछ र मित्रहरूको बीचमा प्रशस्त लोकप्रियता आर्जन गर्न सफल हुन्छ । यस्तो व्यक्ति कठिनाईहरूमा पनि हँसिलो देखिन्छ र आफ्नो प्रयत्नबाट जीवनमा पूर्ण सफलता प्राप्त गरेर नै छोड्दछ ।

यदि शुक्र पर्वत धेरै नै उठेको छ भने यस्तो व्यक्ति भोगी र कामी हुन्छ तथा सौन्दर्यको पछि भाग्ने हुन्छ। प्रेम र सौन्दर्यका लागि यस्तो व्यक्ति जे गर्न पनि तयार रहन्छ र त्यसबेला क्षणिक आवेशमा यस्तो व्यक्तिले केही पनि अगाडि-पछाडि सोच्दैन । यदि यो क्षेत्र दबिएको वा कम उन्नत छ भने अथवा यस क्षेत्रमा आवश्यकताभन्दा धेरै रेखाहरू एवं जाल देखिन्छन् भने यस्तो व्यक्ति निराशावादी प्रवृत्तिको हुन्छ । यस्तो व्यक्तिको प्रेम पनि शुद्ध प्रेम नभई त्यसको पछाडि वासना वा स्वार्थ लुकेको हुन्छ। यस्तो व्यक्ति ठूलो योजना बनाउँछ, दिवास्वप्न देख्दछ, तर यस्तो व्यक्तिले आफ्नो उद्देश्यमा पूर्णत: सफलता प्राप्त गर्न सक्दैन । भावनाशून्य हुनाले समाजमा पनि यस्तो व्यक्तिलाई पूर्ण यश प्राप्त हुँदैन। यस्तो व्यक्तिको जीवन कलहपूर्ण हुन्छ र वैवाहिक जीवनमा आवश्यकताभन्दा धेरै बाधाहरूको सामना गर्नुपर्ने हुन्छ । क्रमश:

जय गुरुदेव !

# गहना पोखरी जात्रा

नेपाल हरेक विषय प्रसंगले अत्यन्त महत्त्व र गरिमा बोकेको गौरवशाली पूण्यभूमि हो । नेपालको कुनै पनि भूभाग यस्तो छैन जहाँ कुनै पनि विषय प्रसंगले विशेष महत्त्व नपाएको होस् । कतै पौराणिक, कतै ऐतिहासिक, कतै धार्मिक, कतै वैदिककालका प्रसंगका महत्त्वपूर्ण महिमाले सम्पन्न नेपालभूमिको हालको राजधानी क्षेत्र त झनै उल्लेख्य ऐतिहासिक गरिमायुक्त छ । लिच्छवि राज्यकालको राजधानी नगरी (विशालनगर) क्षेत्रमा प्रख्यात् गहनापोखरी जात्राको प्रसंग अत्यन्त रोचक छ ।

हाल काठमाडौं महानगरपालिकाको वडा नं ३३, ५, ४, ३, २ र १ समेतका क्षेत्रका वासिन्दाले मनाउने सप्ताहव्यापी टुँडालदेवी जात्राले आफ्ना श्रद्धालु भक्तजनहरूको श्रद्धा, मान्यता मात्र पाएको छैन, वैदिककाल तथा प्राग्ऐतिहासिककालदेखिको परम्परागत प्रचलनलाई समेत निरन्तरता दिइरहेको छ ।

**जात्रा प्रसंग :**

माता टुँडालदेवी (स्थानीय जनजिब्रोमा प्रचलित नाम) स्वयं वैष्णवी माता गरुडबाहिनी भगवती मनुष्यलोकमा रहनु भएको बेलामा एउटा घटना घट्न पुग्यो जसअनुसार माता भाटभटेनी देवी (आकाशदेवी तथा ब्रह्मायणी नामले पनि परिचित) को गहना पानीघाट (हालको गहना खोज्ने पोखरी) टंगालमा स्नानादिको क्रममा पोखरीमा खसेर हरायो । माता टुँडालदेवीलाई गहना खोजिदिन आग्रह भयो । तत्कालै माता टुँडालदेवीले पनि भोलिपल्ट वैशाख शुक्ल परेवा तिथिका दिन खोज्न जाने वचन दिनुभयो ।

गहना खोज्ने कार्यका लागि माता भाटभटेनी आफ्नो घर (हाँडीगाउँ भाटभटेन टोलस्थित आफ्नो मन्दिर) बाट चैत शुक्ल चतुर्दशीको साँझ पहँलो घाममा सपरिवार सम्पूर्ण टोलबासी, छरछिमेकीहरू समेत साथ लगाएर बास्ना आउने धूप, दीप, बाजा-गाजासहित माइती टुँडालदेवी (चण्डोल क्षेत्र) मन्दिर जाने र भोलिपल्ट दिनभरि माइतीमा बसेर मान, पूजादि खाई आमालाई आफ्नो गहनाहरू खोजिदिन आग्रह गरी सोही दिन चैत्र शुक्ल पूर्णिमाका दिन अबेर राति घर फर्कने परम्परा छ । त्यतिखेर माता कोप भवनमा रहेर फर्कने हुँदा सो फिर्ती भयानक त्रासपूर्ण (मुत्युपर्यन्त) हुने भएकोले देवीहरू बोक्ने पूजारीहरू, एकोहोरो बाजा बजाउने दुई-तीनजना र धूप बाल्ने मात्र सो यात्रामा रहने गर्छन् ।

भोलिपल्ट वैशाख कृष्ण परेवाका दिन विशालनगर भीमसेन स्थानबाट बिहान सिन्दूर जात्राबाट माता वैष्णवीको रथयात्रा प्रारम्भ भई हाँडीगाउँको तीनवटै टोलका जनता भक्तजनहरूको मान, मर्यादा, पूजा, बलि ग्रहण गर्दै साँझतिर टंगालस्थित उपरोक्त गहना खोजिदिने परम्परा हालसम्म कायम रहेको छ ।

हाल सरकारी गुठीबाट यो जात्रा संचालन हुने गर्दछ । उक्त दुई तले (करिब १२ फुट अग्लो) रथ अगाडि, पछाडि गरेर २४ जना गुठीका भारवाहक नेवार जातिले बोकेर संचालन हुन्छ । यो रथयात्रा अत्यन्त आकर्षक र शोभायमान देखिन्छ । यस रथयात्रामा नक्साल भगवतीको खट (माने खट) ले यात्राको प्रारम्भदेखि अन्त्यसम्म साथ दिएर अन्त्यमा तीनपटक दर्शन गरेर (रथ र खट बोकाउने प्रचलन) तत्काल नुवाकोट भैरवी यात्राको लागि उक्त खट प्रस्थान गर्दछ । ठूलो रथयात्रा भने तीन दिनसम्म जात्रा कायम राख्नुपर्ने भएकोले ठूलो डबलीमा (हाडी गाउँमा) बाहिरै रहन्छ । तीन दिनसम्म उक्त क्षेत्रका बासिन्दाले नित्य पूजा, भजन-कीर्तन पनि गर्ने परम्परा छ । यसपटक २०६५ साल वैशाख १ गते यस जात्रा परेको छ र सो रथयात्रा हेर्न हजारौं मानिसहरूको घुइँचो लाग्ने गर्दछ । जय गुरुदेव !

# माहात्म्य– वैशाख महिना

**न माधवसमो मासो न कृतेन युगं समम् ।**
**न च वेदसमं शास्त्रं न तीर्थं गङ्गया समम् ॥**

**(स्कन्दपुराण, वै०वै०मा० २।१)**

वैशाख महिनाजस्तो महिना कुनै छैन, सत्ययुगसमान कुनै युग छैन, वेदसमान कुनै शास्त्र छैन । वैशाख महिना आफ्ना कतिपय वैशिष्ट्यका कारण उत्तम महिना मानिन्छ ।

वैशाख महिनाको सम्बन्धमा नारदले अम्बरीषलाई बताउनुभएको थियो– वैशाख महिनालाई ब्रह्माले सबै महिनाहरूमध्ये उत्तम सिद्ध गर्नुभयो । वैशाख महिनाले मातृवत्‌रूपमा सबै जीवलाई सदा अभीष्ट वस्तु प्रदान गर्दछ, यो धर्म, यज्ञ, क्रिया र तपस्याको सार हो र सम्पूर्ण देवताहरूद्वारा पूजित छ । जसरी विद्याहरूमा वेदविद्या, मन्त्रहरूमा प्रणव, वृक्षहरूमा कल्पवृक्ष, धेनुहरूमा कामधेनु, देवताहरूमा विष्णु, वर्णमा ब्राह्मण, प्रिय वस्तुहरूमा प्राण, नदीहरूमा गङ्गा, तेजहरूमा सूर्य, अस्त्रशस्त्रमा चक्र, धातुहरूमा सुन, वैष्णवहरूमा शिव तथा रत्नमा कौस्तुभ मणि उत्तम छन्, त्यसैप्रकार धर्मको साधनभूत महिनाहरूमा वैशाख महिना सबैभन्दा उत्तम छ । भगवान् विष्णुलाई प्रसन्न गर्ने यस महिना समान दोस्रो कुनै महिना छैन ।

जो वैशाख महिनामा सूर्योदयभन्दा पहिल्यै स्नान गर्दछ, ऊसँग भगवान् विष्णु निरन्तर प्रिती राख्नुहुन्छ । पाप तबसम्म गर्जिरहन्छ जबसम्म जीवले वैशाख महिनामा प्रात:काल स्नान गर्दैन । राजन् ! वैशाख महिनामा सबै तीर्थ, देवता आदि (तीर्थका अतिरिक्त) बाहिरको जलमा पनि सधैँ स्थित हुन्छन् । वैशाख सर्वश्रेष्ठ महिना हो र यस महिना भगवान् शेषशायी विष्णुको प्रिय महिना हो । सबै प्रकारका दानबाट जुन पूण्य प्राप्त हुन्छ र सबै तीर्थबाट जुन फल प्राप्त हुन्छ, त्यसलाई वैशाख महिनामा केवल जलदान गरेर मात्रै पनि मनुष्यले प्राप्त गर्न सक्दछन् । जो जलदानमा असमर्थ छन्, ऐश्वर्यको अभिलाषा राख्ने पुरुषलाई आवश्यक छ कि ऊ अरूलाई प्रबोध गरोस्, अरूलाई जलदानको महत्त्वबारे बताओस् । सबै प्रकारको दानभन्दा यो बढी हित गर्नेवाला छ । जो वैशाख महिनामा बाटोमा यात्रीका लागि जलगृहको व्यवस्था गर्दछ, ऊ विष्णुलोकमा प्रतिष्ठित हुन्छ । नृपश्रेष्ठ ! प्रपादान अथवा जलगृहले देवताहरू, पितृदेव तथा ऋषिहरूलाई अत्यन्तै प्रिती दिनेछ । जसले जलगृह लगाएर यात्रीहरूको थकान मेट्दछ, सन्तुष्ट गर्दछ, उसले ब्रह्मा, विष्णु र शिव आदि देवहरूलाई सन्तुष्ट गरेको मानिन्छ । राजन् ! वैशाख महिनामा जलको इच्छा राख्नेलाई जल, छायाको चाहना गर्नेलाई छाता र पंखा चाहनेलाई पंखा दिनुपर्दछ । राजेन्द्र ! जो व्यक्ति तीर्खाबाट पीडित महात्मा पुरुषका लागि शीतल जल प्रदान गर्दछ, त्यो त्यत्ति नै मात्रामा १० हजार राजसूय यज्ञको फल प्राप्त गर्दछ । घाम र परिश्रमबाट पीडित ब्राह्मणलाई जसले पंखा हम्केर शीतल पार्दछ, त्यो त्यति नै मात्रामा पापरहित भएर भगवान्‌को पार्षद हुन पुग्छ । जो बाटोमा थाकेका श्रेष्ठ द्विजलाई कपडाले मात्रै पनि हम्कन्छ, त्यो त्यत्तिले मात्रै पनि मुक्त भएर भगवान् विष्णुको सायुज्य प्राप्त गर्दछ । जसले विष्णुप्रिय वैशाख महिनामा पादुका दान गर्दछ त्यो यमदूतहरूलाई तिरस्कार गरेर विष्णुलोकमा जान्छ । जसले बाटोमा अनाथहरूका लागि बस्ने विश्रामस्थल बनाउन लगाउँछ, त्यसको पूण्यफल त वर्णातीत छ । मध्याह्नमा आउने ब्राह्मण अतिथिलाई भोजन दिनाले त्यसबाट पाउने फलको अन्त छैन ।

वैशाखमा तेल लगाउनु, दिनमा सुत्नु, कांस्य पात्रमा भोजन गर्नु, खातमा सुत्नु, घरमा नुहाउनु, निषिद्ध पदार्थ खानु, दुईपटक भोजन गर्नु र राति खानु आठ कुरालाई त्याग्नुपर्दछ ।

तैलाभ्यङ्गं दिवास्वापं तथा वै कांस्यभोजनम् ।
खट्वानिद्रां गृहे स्नानं निषिद्धस्य च भक्षणाम् ॥
वैशाखे वर्जयेदष्टौ द्विभुक्तं नक्तभोजनम् ॥

(स्क०पु०वै०वै०मा० ४।१-२)

जो पुरुष वैशाख महिनामा व्रतको पालन गर्दछ, पद्म पातमा भोजन गर्दछ ऊ सबै पापहरूबाट मुक्त भएर विष्णुलोकमा जान्छ । जो विष्णुभक्त पुरुष वैशाख महिनामा नदीमा स्नान गर्दछ, त्यो तीन जन्मको पापबाट निश्चय नै मुक्त हुन जान्छ । जो सूर्योदयको समयमा कुनै समुद्रगामिनी नदीमा वैशाख स्नान गर्दछ, त्यो सात जन्मको पापबाट तत्काल छुट्दछ । सूर्यदेव मेषराशिमा हुँदा भगवान् विष्णुको उद्देश्यबाट वैशाख महिना स्नानको व्रत लिनुपर्दछ । स्नानको अनन्तर भगवान् विष्णुको पूजा गर्नुपर्दछ । स्कन्दपुराणका अनुसार महीरथ नामक एक राजा कामनाहरूमा आसक्त तथा अजितेन्द्रिय थिए, उसले केवल वैशाख स्नानको सुयोगबाट वैकुण्ठधाम प्राप्त गरे । वैशाख महिनाका देवता भगवान् मधुसूदन हुनुहुन्छ । उहाँसँग यसप्रकार प्रार्थना गर्नुपर्दछ–

**मधुसूदन देवेश वैशाखे मेषगे रवौ ।**
**प्रात:स्नानं करिष्यामि निर्विघ्नं कुरु माधव ॥**

'हे मधुसूदन ! हे देवेश्वर माधव ! म वैशाख महिनामा मेषराशिमा सूर्य स्थित हुँदा प्रात: स्नान गर्नेछु, हजूर यसलाई निर्विघ्न पूर्ण गर्नुहोस् ।'

तत्पश्चात् निम्न मन्त्रबाट अर्घ्य प्रदान गर्नुपर्दछ–

**वैशाखे मेषगे भानौ प्रात:स्नानपरायण: ।**
**अर्घ्यं तेऽहं प्रदास्यामि गृहाण मधुसूदन ॥**

*स्रोत: कल्याण, व्रतपर्वोत्सव-अंक, जनवरी, २००४ ।*

नयाँ वर्ष २०६५ सालको उपलक्ष्यमा समस्त देशवासीमा हार्दिक मंगलमय **शुभकामना** व्यक्त गर्दछु । साथै सद्गुरुदेवहरूबाट समस्त देशवासीहरूमा कृपा एवं आशिर्वाद प्राप्त भइरहोस् ।

यही याचना

**उमानाथ लुईटेल**
बानेश्वर, काठमाडौं

---

नववर्ष २०६५ सालको पावन अवसरमा सम्पूर्ण देशवासी एवं शुभचिन्तकरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**सुशिल सिंघल**
महालक्ष्मी प्लाजा, कालिमाटी

---

नववर्ष २०६५ सालको पावन अवसरमा सम्पूर्ण साधक साधिका, भक्तजन एवं शुभचिन्तकहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**विनायक ज्ञवाली** **विधान ज्ञवाली**
**इन्दु ज्ञवाली** **बिभव ज्ञवाली**

**बालाजु, काठमाडौं**

---

नववर्ष २०६५ सालको पावन अवसरमा हाम्रा सम्पूर्ण ग्राहक एवं शुभचिन्तकरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

**Om Shree**
**Boudha Ghee Udhyog**
Dachi, Kathmandu
Mobile: 9841 202281, 9841347435
Tel.: 4451682

शुद्ध घिउको लागि सम्पर्क राख्नुहोस् ।

---

नव वर्ष २०६५ ले सम्पूर्ण देशवासीमा सुख, शान्ति एवं समृद्धिको लहर ल्याओस् भनि **हार्दिक शुभकामना** व्यक्त गर्दछु ।

**प्रो. गोपाल राय**
**न्यू विजय ट्रेडर्स**
डिल्लीबजार, काठमाडौं
फोनः २०६१३२६

किराना तथा खाद्यान्नको लागि सुपरिचित नाम

---

नव वर्ष २०६५ साल तथा परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको **७५ औं अवतरण दिवस** एवं सिद्धाश्रम शक्ति केन्द्रको **नवौं वार्षिकोत्सव**को पावन अवसरमा सम्पूर्ण साधक साधिका एवं भक्तजनहरूलाई गोरक्ष निखिल युग स्थापनाको महान् कार्यमा तन, मन र आत्मादेखि नै समर्पित हुने प्रेरणा सदैव प्राप्त होस् भनी परमपूज्य सद्गुरुदेव समक्ष हार्दिक प्रार्थना गर्दछौं ।

**सिद्धाश्रम शक्ति केन्द्र**
तथा सम्पूर्ण कार्यकर्ताहरू
सम्पर्क कार्यालय, ललितपुर

---

नयाँ वर्ष २०६५ को पावन अवसरमा हाम्रा सम्पूर्ण विद्यार्थी एवं शुभचिन्तकहरूमा हार्दिक मंगलमय शुभकामना व्यक्त गर्दछौं ।

सुवर्ण अवसर
प्रि-टेष्ट, एस.एल.सी.को
एक वर्षे कक्षामा भर्ना खुल्यो ।

कक्षा सञ्चालनः
वैशाख १ गतेदेखि

**बुद्ध एकेडेमी**
गंगबु, काठमाडौं, फोनः ४३६५९५५
शिक्षा तपाईंको सुनौलो भविष्यको आधार हो ।

---

नयाँ वर्ष २०६५ को पावन अवसरमा हाम्रा सम्पूर्ण ग्राहक महानुभाव एवं शुभचिन्तकहरूमा
**हार्दिक मंगलमय शुभकामना**

**प्रकाश मसला**
जोरपाटी काठमाडौं
मोबाइलः ९८४१२८४८७१

शुद्ध मसलाको एक मात्र नाम **प्रकाश मसला**

आयुर्वेद

# पानी कसरी पिउने ?

## जल र यसको सही उपयोग

सृष्टि संरचनामा प्रत्येक जीव तथा वनस्पतिका लागि अत्यावश्यक तत्त्व जल नै भएको कुरा त सर्वविदितै छ । जल शुद्ध नगरी पिएमा, स्थान र समयअनुसार मात्रा नमिलाई जथाभावी, जाडो समयमा कम र गर्मी समयमा एकैचोटि धेरै, खाना खानेबित्तिकै पिउने बानीले धेरै किसिमका रोगहरू निम्त्याउने गर्दछ । त्यसैले, यस अंकमा हामीले जल, यसको महत्त्व र प्रयोग गर्ने तरीकाको बारेमा आयुर्वेद र आधुनिक चिकित्सा विज्ञानबाट महत्त्वपूर्ण जानकारीहरू समेट्ने प्रयास गरेका छौँ ।

ऋग्वेदमा जललाई सम्बोधन गरिएको छ– हे जल, तिमी स्वास्थ्यका कारण हौ । अत: हामीलाई यस्तो स्वास्थ्य प्रदान गर जसद्वारा हामीले सत्ययुगको सुगम मार्ग प्राप्त गर्न सकौँ ।

अथर्ववेदमा जल नै औषधि हो भनिएको पाइन्छ । जलले रोगलाई नाश गर्दछ । जलले सबै रोग भगाउँछ । जलले तिमीलाई पनि कठीन रोगको पञ्जाबाट बचाउने छ भनेर उक्त वेदमा उल्लेख गरिएको छ ।

## आधुनिक दृष्टिकोणमा जलः

मानव शरीरमा यसको तौलको ६० देखि ७० प्रतिशत जलीय अंश रहेको हुन्छ । यहाँ कुनै व्यक्तिको तौल ७० के.जी. छ भने उसको शरीरमा लगभग ३६ देखि ४९ लिटर जलीय द्रव्य हुन्छ । शरीरमा रहेको पानीलाई अन्त:कोषीय तरल (दुई तिहाई) र बाह्यकोषीय तरल (एक तिहाई) गरी दुई भागमा विभाजन गरिएको छ । बाह्यकोषीय तरलमा प्लाज्मा, इन्टरस्टिसियल फ्लुड, लिम्फ, ट्रान्ससेलुलर फ्लुड, सेरिब्रोस्पाइनल फ्लुड आदि पर्दछन् । मुख्यतया शरीरको सम्पूर्ण भित्री क्रियाहरू सुचारुरूपले सञ्चालन गर्न, तापक्रम, पि.एच., ब्लड प्रेसर, आयोनिक घनत्व सन्तुलन गर्न तथा अक्सिजन र कार्बनडाइअक्साइडको मात्रा निर्धारण गर्न, पचेका खाद्य पदार्थबाट प्राप्त खाद्यरस शरीरभरि फैलाउन जलको महत्त्वपूर्ण भूमिका हुन्छ । जलको मात्रा यथेष्ट नभएमा शरीर चल्न सक्दैन । त्यसैले झाडा पखालाजस्ता रोग लागेर शरीरबाट अत्यधिक तरल पदार्थ निस्कदा जीवन जल, नून-चिनी-पानी, सलाइन वाटर आदि उचित मात्रामा दिएर तरल पदार्थको सन्तुलन गर्ने गरिन्छ ।

दुषित पानीबाट हुने मुख्य रोगहरू- टाइफाइड, कोलेरा, इन्फेक्टिभ हेपाटाइटिस (ए र सी), स्क्याबिज, ट्रकोमा, बेसिलरी डिसेन्ट्री, सिस्टोसोमिएसिस, ग्युनिया वर्म, औलो, हात्तीपाइले रोग, जुका, स्लिपिङ्ग सिकनेस आदि हुन् ।

अष्टाङ्ग संग्रह सूत्रस्थानअनुसार जलको गुण निम्न रहेको छ– जीवन (प्राणधारक), तर्पण (तृप्तिकारक), हृद्य (हृदयको लागि हितकारी), आह्लादकारक (सुखकारक), बुद्धिप्रबोधक, तनु (स्वच्छ), अव्यक्त रस स्वादिलो, जिह्वा इन्द्रियको प्रिय, शुद्ध, शीत, लघु (चाँडो पच्ने) र अमृतसमान हुन्छ । यो सूर्यको किरणले माथि खिचेर छाडेको हुनाले लघु तथा वातकफहारक, शीतल, जीवनीय एवं सौम्य हुन्छ । पित्तविकार, रक्तविकार तथा विषविकार नाशक हुन्छ । अत: अत्यन्त निषेधित अवस्थामा पनि पानी कहिल्यै निषेध हुँदैन । पानी नपाएमा शरीरमा शिथिलता आउने तथा मृत्यु पनि हुन सक्छ । अत: जल बिना स्वास्थ्यको प्राप्ति तथा रोगीको जीवनयापन हुनै सक्दैन ।

**१) ऊष्ण जल :**

ऊष्ण जल सेवन गरेपछि विपाकमा मधुर तथा वीर्यमा शीत हुन्छ । त्यसैले केही बढी पिउँदा पनि हानी नगर्ने हुन्छ र लघु हुनाले ऊष्ण जल पिउनुपर्दछ ।

देश, काल, गुरुता, लघुता आदि विचार गरेर ३/४ भाग, वा १/४ भाग वा १/२ भाग बाँकी रहने गरी पकाइएको फिंजरहित, वेगरहित (उम्लिएर नपोखिएको) तथा मलरहित जल हिक्का, आध्मान, वातकफज रोग, तृष्णा, कास, श्वास, प्रतिश्याय, पार्श्वशूल, आमदोष एवं मेदोरोगमा तथा नवज्वरमा हितकर हुन्छ ।

**२) मनतातो जल :** खाने नपचेको वा केही पचेको अवस्थामा, तिर्खा नलागे पनि (मनतातो) जल पिउनु राम्रो हुन्छ । जति पानी पिउनाले अन्न भिज्दछ त्यति मात्र पिउनु अन्यथा बढी भएमा अग्निमान्द्य हुन्छ । कफ एवं वायुले गर्दा कोष्ठमा रोकिएको नपचेको खाना ऊष्ण जलद्वारा द्रवीकृत (पातलो) भई आमाशयको बन्धनबाट मुक्त हुन्छ र चाँडो पच्दछ ।

**३. शीतल जलः** शीतल जल सेवन गर्नाले मदात्यय, ग्लानी, मूर्च्छा, सर्दी, थकाइ, भ्रमरोग, तृष्णा, गर्मी, दाह, पित्तरक्त तथा विषविकार नाश गर्दछ ।

## जल कहिले कसरी पिउने ?

केवल जल मात्र, औषधियुक्त जल, पकाएको जल, चिसो तथा ऊष्ण आदि ५ प्रकारका जल राम्रोसँग विचार गरी उचित मात्रामा प्रयोग गरेमा अमृत समान हितकर हुन्छ अन्यथा विष समान हानिकारक हुन्छ ।

भोजनको शुरुमा पिएको जलले मन्दाग्नि एवं शरीर दुब्लो गराउँछ, भोजनको अन्तमा पिएको जलले शरीरको मोटोपन तथा आमाशय र यसमाथि (उरः, कण्ठ, शिर आदिमा) कफ बढाउँछ । भोजनको बीच-बीचमा पिएको जलले अङ्गहरूमा समता ल्याई

## जलसम्बन्धी केही महत्त्वपूर्ण जानकारीहरू-

- चाणक्यशतकअनुसार शरीरमा तुरुन्त बल प्रदायक ६ चीजहरूमध्ये ऊष्ण जल स्नान एक हो । यो वात तथा कफनाशक हुन्छ ।
- अत्यन्त ऊष्ण जल शिर स्नानको लागि हानिकारक हुन्छ ।
- आचार्य चरकअनुसार सबैथरिका पानीहरूमा आकाशबाट वर्षा भएर आउने पानी बढी पथ्य र हितकारक हुन्छ ।
- ५ देखि १० मिनेटसम्म उमालेको पानी स्वास्थ्यको लागि उत्तम मानिन्छ ।
- जल शुद्धिकरणका उपायहरूमा ब्लिचिङ्ग पाउडर, क्लोरिनेसन, अल्ट्राभ्वाइलेट किरण, आयोडिन, पियुस, वाटर गार्ड, फिल्टर आदि पर्दछन् ।
- फिल्टरबाट ब्याक्टेरियाहरू मात्र छानिने र भाइरसहरू नछानिने हुँदा फिल्टर गर्दैमा भाइरल रोगहरूबाट बच्न सकिँदैन ।
- परेको पानी सबैभन्दा शुद्ध र नरम हुन्छ तर इनारको पानी सबैभन्दा कडा र मिनरलयुक्त हुन्छ ।
- मानिसलाई दैनिक पिउन २ लिटर र अन्य प्रयोगको लागि १५०-२०० लिटर पानी चाहिन्छ ।
- नारिकेल जल स्निग्ध, मधुर, शुक्र वृद्धिकर, शीतल, लघु, प्यास नाशक पितघ्न, वातघ्न, दीपन तथा वस्तीशोधक हुन्छ ।
- पिच्छिल कृमीयुक्त, फोहोर मलमूत्र, स्वेदयुक्त किचड एवं विरस गाढा तथा दुर्गन्धयुक्त हुन्छ । यो जल पिउनका लागि अयोग्य मानिन्छ ।
- आगोमा तताइएको ढुङ्गा, चाँदी, माटोको भाँडा, सुन आदिलाई पानीमा राख्यो भने त्यो जल विशिष्ट जल, त्रिदोषघ्न एवं तृष्णानाशक हुन्छ । सूर्यको किरणद्वारा तताइएको तर पछि सेलाएर पिएको जल पनि विशिष्ट गुणयुक्त हुन्छ ।

मध्यम शरीर हुन्छ, रसरक्तादि धातुहरू र पाचकाग्निको समता राख्दछ र अन्नलाई सुखपूर्वक पचाउँछ ।

सबै प्रकारको भौम जल सूर्योदयपूर्वको समय अर्थात् उषा:कालमा सेवन गर्नुपर्दछ । प्रात:कालमा जलमा निर्मलता र शीतलाता अधिक हुने हुनाले त्यस बेलाको जललाई अति उत्तम जल मानिन्छ भन्ने सुश्रुत संहितामा उल्लेख भएको छ ।

एक ठाउँमा पानी नपच्दै अर्को प्रदेशको पानी पिउनु हुँदैन, चिसो जल नपच्दै उमालेको जल पिउनु हुँदैन र उमालेका जल पचिसकेपछि पनि सधैं उमालेकै जल सेवन गर्नेले अन्य आम जल पिउनु हुँदैन । त्यस्तै तातो पानी नपच्दै चिसो जल पिउनु हुँदैन अर्थात् एकै साथमा अलग-अलग प्रकारको ठाउँको पानी पिउनु हुँदैन ।

विष्णुपुराणअनुसार- भोजन गर्दा ठोस अन्नले पेटको आधा भाग भर्नुपर्दछ र एक भाग पानीले भर्नुपर्दछ र वायुको सञ्चालनका लागि चौथो एक भाग खाली छोड्नुपर्दछ ।

### अधिक जलपानबाट हुने हानी

जलको अतियोग भएमा पित्त एवं कफ दोष बढ्दछ र विशेषगरी ज्वरोमा पित्त एवं कफकारक हुन्छ । यसका साथै आम दोष, तृषा, निद्रा, तन्द्रा, आध्मान, अङ्गमा भारीपन, कास, मन्दाग्नि, प्रसेक (लालस्राव), श्वास तथा पिनास बढाउँछ ।

एकैपटकमा धेरै पानी पिउँदा अन्न राम्ररी पच्न पाउँदैन । पानी नखाई बसे पनि पाचन राम्रो हुँदैन । त्यसैले मानिसले अग्नि अथवा पाचनशक्ति बढाउन थोरै मात्रामा धेरैपटक पानी खाने गर्नुपर्दछ ।

### जलपान निषेधका अवस्थाहरू

रोगी, बलहीन, विषम दोष तथा विषम अग्नि हुनेको लागि चिसो पानी थोरै मात्र पनि हितकर हुँदैन । जल अग्निको विरोधी हुनाले मन्दाग्नि आमजल वर्जन गर्नु तथा पक्वजल पनि थोरै-थोरै गरेर पिउनु पर्दछ । अभिष्यन्द, प्लीहोदर, विद्रधि, गुल्मरोग, पाण्डुरोग, उदररोग, अतिसार, अर्श, ग्रहणीरोग, शोष तथा शोथका रोगीले र कृश एवं अशक्तले पनि आमजल सम्पूर्णत: त्याग गरी औषधिहरूद्वारा सुसंस्कृत (वा औषधि मिसाएर बनाएको) पानी पिउनुपर्दछ ।

खाना अजीर्ण अर्थात् अपच भएको बेलामा अरू कुनै कुरा नखाई पानी मात्र खाएको खण्डमा औषधिको काम गर्दछ, पाचनमा मद्दत गर्दछ । भोजन पचेपछि भोजन गरेको ३ घण्टापछि खाएको पानीले बल प्रदान गर्दछ किनकि ३ घण्टापछि खाएको पानीले भोजनको पाचनमा कुनै पनि असर पुऱ्याउँदैन । भोजनको बीच-बीचमा थोरै-थोरै मात्रामा खाएको पानी अमृतसमान हुन्छ किनकि खानाको बीच-बीचमा खाएको पानीको घुट्काले खानामा रुची उत्पन्न गराउँछ, खानालाई भिजाउन र क्लेदन गर्न मद्दत पुऱ्याउँछ, पच्नमा मद्दत पुग्दछ ।

भोजनपछि तुरुन्तै खाएको पानी विषजस्तै अहित गर्ने हुन्छ किनकि खाना पाचनको निमित्त आमाशयबाट निस्कने ग्याष्ट्रिक जुस जसमा पेप्सिन, हाइड्रोक्लोरिक एसिड आदि हुन्छन्, सानो आन्द्राबाट निस्कने शुक्रेज, माल्टेज, ल्याक्टेज, ट्रिप्सिन, काइमोट्रिप्सिन, पित्त थैलीबाट निस्कने बाइल, प्याङ्क्रियाजबाट निस्कने लाइपेज तथा एमाइलेज आदिजस्ता पाचक रसहरूलाई पातलो बनाउँछ जसले गर्दा ती पाचक रसहरूले खानालाई पूर्णरूपले पचाउन सक्दैन । साथै, खानापछि तुरुन्तै खाएको पानीले खानालाई आमाशयबाट चाँडै नै सानो आन्द्रातिर धकेल्ने हुन्छ जसले गर्दा आमाशयमा पच्नुपर्ने कुराहरू राम्रोसँग पच्न पाउँदैन । यी कारणहरूले गर्दा खानापछि तुरुन्त पिएको पानी विषसमान हानिकारक हुन्छ ।

सन्दर्भ ग्रन्थहरू-

१.अष्टाङ्ग संग्रह सूत्रस्थान (नेपाली अनुवाद), डा.श्याममणि अधिकारी

२.वैद्यकीय सुभाषित साहित्यम्, डा.भाष्कर गोविन्द घाणेकर, चौघम्बा संस्कृत संस्थान, वाराणासी

३.अ टेक्स्ट बुक अफ फिजियोलोजी, ११औं संस्करण, गाइटन एण्ड हल

४.एनाटोमी एन्ड फिजियोलोजी इन हेल्थ एन्ड इलनेस, रस एन्ड विल्सन, चर्चिल लिभिङ्गस्टन

# सूक्ष्म शरीरको यात्रा

# नागलोक पुग्दाको अनुभव

**आत्मीय पाठकवृन्द, धेरै पाठकहरूको विशेष अनुरोधमा हामीले 'डायरी' स्तम्भलाई पुनः प्रकाशित गरेका छौं । कोरा सैद्धान्तिक व्याख्याभन्दा प्रयोगात्मकरूपमा एकजना साधकले भोगेका अनुभवहरूलाई यहाँ जस्ताको तस्तै उतारिएको छ । यसको मौलिकतालाई कायम राख्दै साधकको व्यक्तिगत पृष्ठभूमि एवं परिचयलाई भन्दा रोचक एवं आवश्यक प्रसङ्गहरूलाई मात्र यसमा समावेश गरिएको छ । यसका बाँकी अंशहरूलाई धारावाहिकरूपमा क्रमशः प्रस्तुत गर्दै लगिनेछ ।**

**अघिल्लो अङ्कबाट क्रमशः**

यसरी डुब्दै जाने क्रममा आफ्नो वास्तविक स्वरूप बिर्सन सक्ने सम्भावना पनि हुँदोरहेछ । कुन रंगबाट प्रवेश गर्दै भित्र गएको हो सोही रंग हुँदै बाहिर आउनुपर्ने हुँदोरहेछ । जस्तै, पहेँलोबाट रातो, रातोबाट खैरो, खैरोबाट निलो, निलोबाट हरियो, हरियोबाट फिक्का पहेँलो, फिक्का पहेँलोबाट सेतो हुँदै गएको हो भने फर्किंदा सेतोबाट फिक्का पहेँलो, फिक्का पहेँलोबाट हरियो, हरियोबाट निलो, निलोबाट खैरो, खैरोबाट रातो, रातोबाट पहेँलो । चक्रव्यूजस्तै क्रम हुँदोरहेछ । एक तह पनि तल-माथि गर्न पाइँदो रहेनछ । सफल र असफलभन्दा पनि प्रकृतिको नियमलाई पालना गर्ने र नगर्ने बीचको प्रसङ्ग आउँदोरहेछ । यसरी म अगाडि बढ्दै गइरहेको थिएँ । एक्कासी अत्यन्त सेतो खालको भगवान् श्रीकृष्णको सुदर्शन चक्रजस्तो तेजस्वी चक्र मेरो अगाडि देखापर्‍यो । त्यसपछि उक्त चक्र नागशरीरमा रूपान्तर भयो । उहाँको दर्शन गर्दागर्दै विभिन्न स्वरूपका दर्शन प्राप्त हुन थाले । म हात जोडेर नम्रताका साथ दर्शन गरिरहेँ, गरिरहेँ ।

मलाई त्यतिबेला जसको याद आउँथ्यो, उहाँबाट सोही प्रकारको परिणति प्राप्त हुन्थ्यो । म छक्क पर्दै हेर्दै गएँ । सोच्नै सकिन के भइरहेको छ भनेर । गुरु, महागुरु, परमगुरु, परमेष्ठी गुरु, देवीदेवता जे भने पनि उहाँ नै हुनुहुन्छ भन्ने कुरा मैले यतिबेला आएर छर्लङ्ग बुझ्ने मौका पाएँ । उहाँले मलाई दर्शन दिनुभएको औचित्यबारे पनि बुझ्ने मौका पाएँ । त्यसपछि उहाँले मलाई श्रापोद्धार दीक्षा प्रदान गर्नुभयो । साथै उक्त दीक्षा शक्तिपातपूर्ण रूपबाट प्रदान गर्नुभयो । मलाई यस्तो अनुभव भयो कि सारा प्रकारका जंजालबाट मुक्त भएँ जस्तो लाग्यो । चारैतर्फ ढोका खुलेको जस्तो भान भयो । सारा संसार मेरैजस्तो लाग्यो । एकप्रकारको आनन्द आइरह्यो, शान्तिको आभास हुन थाल्यो, शक्तिको आभास हुन थाल्यो । के-के भयो के-के, भनेर साध्य छैन ।

जब मैले दीक्षा पाएँ, म त्यसै स्वरूपबाट जपमग्न हुन थालेँ । तपस्याको माध्यमबाट अगाडि बढ्ने निधो गरेँ । म श्रापोद्धार

साधनामा अगाडि डुब्दै गएँ। साधनामा डुब्दै जाने क्रममा यति धेरै विघ्न, बाधा आउने रहेछन् कि त्यसलाई व्यक्त गर्न गाह्रो छ। साथै ती समस्या जसरी आउँछन् त्यसरी नै समाधान गर्न पनि सकिँदोरहेछ । म जप साधनामा लाग्दै गएँ । जबसम्म उक्त साधनाको लक्ष्य प्राप्ति हुँदैन, तबसम्म भङ्ग नगर्ने निधो गरेँ, संकल्प गरेँ। वास्तवमा कल्प नै कला रहेछ। अर्थात् लक्ष्यको अर्को नाम कल्प रहेछ। यसरी कल्पबाट संकल्प र विकल्प दुईवटा हाँगा बनेका रहेछन् । यही कल्पभित्रको संकल्प पूरा गर्नको लागि आत्मशरीरले अनेक लीला रच्दोरहेछ। ब्रह्मा, विष्णु र महेश्वरस्वरूप वास्तवमा यही संकल्प, कल्प र विकल्पजस्तै रहेछ। यी प्रसंगलाई यही छाडौं किनकि यी पक्षहरूको बारेमा खोतल्न थाल्यौं भने के-के निस्किन्छ, के-के ।

म साधनामा तल्लीन हुँदै गएँ । यति धेरै श्राप परेको रहेछ कि सारा वातावरण नै मेरो लागि श्रापैश्रापले भरिएको जस्तो लाग्यो। एउटाबाट मुक्ति पायो अर्को आउँछ। त्यस्तै अर्कोबाट मुक्ति पायो अर्को आउँछ। म साधनामा अगाडि बढ्दै गएँ। वास्तवमा साधना भनेको के रहेछ भन्ने कुरा मैले बल्ल बुझ्न थालेँ । साधनामा धैर्यको परीक्षा हुँदोरहेछ, साहसको परीक्षा हुँदोरहेछ, समर्पणको परीक्षा हुँदोरहेछ, आत्मविश्वासको परीक्षा हुँदोरहेछ।

सम्पूर्ण प्रकारका परीक्षा पार गरि सकेपछि गुरुबाट लिइने परीक्षा करिब-करिब पूरा भएको हुनेरहेछ । गुरुदेव प्रकट भई मलाई पुन: दर्शन दिनुभयो र मेरो साधना पूर्ण भएको घोषणा (संकेत) गर्नुभयो। साथै उहाँले श्रापोद्धार दीक्षाको महत्त्व एवं प्रयोगको बारेमा अलग-अलग ढंगले व्याख्या गर्नुभयो। कुन मन्त्र श्रापित भएको छ र कुन मन्त्र श्रापित भएको छैन भन्ने थाहा पाउनको लागि अपनाइने प्रक्रिया बताउनुभयो । श्रापित मन्त्रलाई कसरी श्रापबाट मुक्त पार्ने भन्ने बारेमा पनि सम्झाउनु भयो, बुझाउनु भयो। मंत्र श्राप हुँदा व्यक्तिमा पनि श्राप पर्न जाँदोरहेछ। व्यक्ति श्रापित हुँदा समाज श्रापित हुँदोरहेछ। यही श्राप प्रक्रियाले गर्दा वरदान प्रक्रियाको जन्म भएको रहेछ । वरदान र श्रापोद्धार एउटै जस्तो लागे पनि भिन्नता रहेछ।

ब्रह्माण्डमा यति धेरै प्रावधान रहेछन् कि जसको बारेमा व्याख्या गरिरहन सम्भव छैन। श्राप भित्रबाट कैयौं प्रक्रियाको जन्म हुनेरहेछ। श्राप र वरदान एउटै सिक्काका दुईवटा पाटाजस्ता रहेछन्। श्रापबाट मुक्त हुने अवधिमा शापोद्धार प्रक्रिया शुरु हुनेरहेछ। खराब के हो ? असल के हो ? भन्ने बारेमा श्रापोद्धार विद्याले छुट्टाउने काम गर्ने होइन कि यसले त केवल उद्धार मात्र गर्नेरहेछ, मुक्त गरिदिने रहेछ । त्यसपछिको संघर्ष आफ्नै ठाउँमा छ। वास्तवमा श्रापोद्धार एउटा विद्या नै रहेछ । यसलाई बुझ्न सकेको खण्डमा, प्रयोगमा ल्याउन सकेको खण्डमा, समाजमा प्रत्यक्ष अप्रत्यक्ष रूपमा धेरै फाइदा लिन सकिने विश्वास मलाई जागेर आयो। श्रापोद्धार दीक्षाको माध्यमबाट जो कुनैलाई पनि उद्धार गर्न चाहेमा उद्धार गर्न सकिँदोरहेछ । तर उद्धार गर्नका लागि पनि विभिन्न प्रावधान हुने रहेछन्। त्यही प्रावधानमा रहेर उद्धार गर्नुपर्ने विधान तय भएको हुनेरहेछ। केही क्षणमा नै सम्पूर्ण श्रापोद्धार ज्ञान प्रदान गरी गुरुदेव त्यहाँबाट अन्तर्ध्यान हुनुभयो । म जहाँको त्यहीँ बसिराखेँ । उहाँको शक्तिको प्रभावबाट नियन्त्रण हुँदै गएपछि मलाई छर्लङ्ग छोडेजस्तो भयो।

म आफ्नै साधनात्मक क्रम पूरा गरी आँखा खोल्दा त तिनी (नागिन) प्रसन्न मुद्रामा मेरै नजिक बसिराखेकी रहिछिन्। मभन्दा तिनी (नागिन) ज्यादा खुशी देखिन्थिन् । मैले सोध्ने आँट पनि गर्न सकिन किनकि प्रसन्नताको अन्त्यपछि दु:खको क्षण आउँछ भन्ने कुरा मैले बुझिसकेको थिएँ। तिनको मप्रतिको सहयोगी भावनाले ममा तिनीप्रतिको समर्पण भाव यति धेरै बढेको थियो कि म जे पनि गरिदिन तयार थिएँ। अकस्मात् त्यो ठाउँ छाड्ने संकेत आयो। क्रमशः।

जय गुरुदेव !

# आश्रम गतिविधि
## मासिक हवन कार्यक्रम

गत चैत्र ४ गते सोमबार पशुपति मृगस्थलीस्थित गोरक्षपीठमा श्री शिवगोरक्ष हवन सम्पन्न भयो । उक्त हवन बिहान ८ देखि ९ बजेसम्म संचालन भएको थियो ।

त्यस्तै, चैत्र ५ गते मङ्गलबार ललितपुरको लगनखेलस्थित वटुक भैरव मन्दिर परिसरमा तान्त्रोक्त वटुक भैरव हवन सम्पन्न भयो । उक्त हवन बिहान ७-८ बजेसम्म चलेको थियो । हवनमा सहभागी हुनेहरूले उक्त दिन कुकुरलाई खानेकुरा दिनुपर्ने र पिट्न नहुने नियम छ ।

त्यसैगरी, चैत्र ६ गते बुधबार बिहान ८-९ बजेसम्म ललितपुरको लगनखेलस्थित महालक्ष्मी मन्दिर परिसरमा तान्त्रोक्त महालक्ष्मी हवन सम्पन्न भयो । उक्त हवनमा सहभागीहरूले दिनभरि रिसाउन नहुने नियम छ ।

गत चैत्र ७ गते बिहीबार लगनखेलको कुम्भेश्वरस्थित बगलामुखी मन्दिर परिसरमा तान्त्रोक्त बगलामुखी हवन सम्पन्न भयो । उक्त हवन बिहान ८–९ सम्म सञ्चालन भएको थियो ।

## फागुमय दिव्य गुरु महोत्सव

गत चैत्र ८ गते शुक्रबार (मार्च २१ तारिख, २००८) काठमाडौंको बसुन्धरामा रहेको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा विभिन्न कार्यक्रमहरूका बीच दिव्य गुरु महोत्सव सम्पन्न भयो । डा. नारायण दत्त श्रीमालीज्यूका रूपमा परम आराध्य एवं परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज धरतीमा अवतरित हुनुभएको पावन दिवसलाई स्मरण गर्दै सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको २१ तारीखका दिन दिव्य गुरु महोत्सव उल्लासमयरूपमा मनाउँदै आइरहेको छ ।

विरलैरूपमा कतिपय कार्यक्रमहरू एकै दिन पर्ने गर्दछ । यसपालिको दिव्य गुरु महोत्सव पनि त्यस्तै भयो । होलि पर्वको पावन दिनमा परेको दिव्य गुरु महोत्सवलाई होलिमय भएर मनाएको दृश्य कम आनन्दप्रद थिएन । साधक साधिकाहरू र अन्य श्रद्धालुहरूले एक आपसमा रङ लगाइदिएर दिव्य गुरु महोत्सवलाई फागुको रङले रङ्गाएका थिए भने कार्यक्रममा सबैलाई फागुको टिका पनि लगाइदिइएको थियो । फागुसम्बन्धी भजनहरूले पनि दिव्य गुरु महोत्सव रंगिएको थियो । यद्यपि दिव्य गुरु महोत्सव त शिष्यहरूका लागि सधैं रंगीन र आनन्ददायक हुने गर्दछ । तर यसपटकको होलि पर्वको अवसरमा परेको दिव्य गुरु महोत्सव झनै रंगीन पुन पुग्यो, झनै आनन्ददायक हुन पुग्यो– सप्तरंगी रङले ।

स्तवन वन्दनासँगसँगै बिहान १०:१५ मा शुरु भएको थियो । महोत्सवमा गुरु पादुकाको दिव्य पूजन, मन्त्रजप,

हवन, आरती, भजन-कीर्तन र नृत्य आदि कार्यक्रमहरू सम्पन्न भएका थिए । दिव्य गुरु महोत्सवमा पूजन गर्ने सौभाग्य साधिका सुभद्रा शाक्य, रेविका शाक्य र सागरलक्ष्मी महर्जनले प्राप्त गर्नुभएको थियो ।

फागु पर्वलाई दिव्य गुरु महोत्सव र दिव्य गुरु महोत्सवलाई फागु पर्वका रूपमा मनाइएको कार्यक्रममा फागुसम्बन्धी चुड्का भजनले सम्पूर्ण उपस्थितहरूलाई आनन्दित तुल्याएको थियो भने सिद्धाश्रम शक्ति केन्द्र, सम्पर्क कार्यालय ललितपुर, गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका भाइ-बहिनीहरू र केन्द्रबाट प्रस्तुत नृत्य, भजनहरूले पनि उत्तिकै आनन्द र उत्साह प्रदान गरेको थियो ।

कार्यक्रमको समाप्तिमा सम्पूर्णलाई फागुको टीका लगाइदिएको थियो । रंगाउँ चुनरिया... भन्ने बोलको भजनमा त सबैले नृत्य गरेर दिव्य गुरु महोत्सवलाई आनन्दित र सधैंको लागि स्मरणीय बनाएको थियो ।

त्यस्तै, संस्थामा सम्पूर्ण कार्यकर्ताहरूका लागि राखिएको कार्यकर्ता भेला (स्टाफ मिटिङ्ग) मा यसपटक तालिम प्राप्त नभएका र अन्य उपस्थित श्रद्धालुलगायत विद्याश्रमका विद्यार्थी भाइबहिनीहरूका लागि पनि खुला गरिएको थियो । स्टाफ मिटिङमा संस्थाको कार्यका लागि रुस भ्रमणबाट फर्कनु भएका सावरपन्थी सदस्यज्यूहरू नं. १ र २ को स्वागत गरिएको थियो ।

कार्यकर्ता भेलामा सावरपन्थी नं. १ सदस्यज्यूले फागु पर्व तन्त्रमार्गीहरूका लागि दिव्य दिन भएको बताउनु भयो । उहाँले फागुको दिनमा आनन्दित हुनेहरूको वर्षभरिको विकृति, विकार हट्ने बताउनु भएको थियो ।

उहाँले सिद्धाश्रम शक्ति केन्द्रमार्फत उच्च किसिमका प्रयोगहरू सम्पन्न हुँदै जाने बताउनुभयो । भ्रमणसम्बन्धी जानकारी दिनुहुँदै उहाँले भन्नुभयो, 'भ्रमण कार्यक्रम अत्यन्तै सफल भयो ।' रुसबाट साधक साधिकाहरूलाई फागुका अवसरमा शुभकामना प्राप्त भएको पनि उहाँले सुनाउनु भयो ।

सावरपन्थी नं. २ का सदस्यज्यूले उक्त अवसरमा संस्थाको इन्टरमिडियट लेभल इन्टरनेशनल भएको बताउनु भयो । उहाँले विश्वव्यापीरूपमा संस्थाको विस्तार हुने बताउनुहुँदै रुसमा भगवान् शिवको तान्त्रोक्त साधना सम्पन्न हुनु आफैमा अद्वितीय भएको बताउनु भयो ।

मिटिङ्गमा आदरणीय सावरपन्थीद्वयले पनि फागु खेल्नुभएको थियो ।

# सावर मातृकाको उदय

'सावर' शब्द मात्रै पनि अत्यन्त दुर्लभ, गोप्य र प्रभावशाली मानिन्छ । झन यससँग सम्बन्धित तहको प्रादुर्भाव हुनु आफैमा परम सौभाग्यको कुरा हो जुन सद्‌गुरुको कृपा बिना असम्भव छ । सद्‌गुरुको कृपा भएमा असम्भव कुराहरू पनि सम्भव हुन सक्छन् भन्ने कुरा गत २०६४ चैत्र २० र २१ गते सम्पन्न गुरु सेवा दलको दशौँ तालिम कार्यक्रममा सावर मातृकाको उदय भएको घोषणाले स्पष्ट गराएको छ । हुन त पृथ्वीतटमै नौलो मानिएको सावरपन्थको उदय भएको कुरा २०६० फागुन ९ गते सिद्धाश्रम शक्ति केन्द्रमार्फत सार्वजनिकरूपमा घोषणा भएको थियो तर सावरपन्थीकै तह वा सो सरह रहेको र सम्पूर्ण साधिकाहरूलाई समेट्ने सावरमातृका तह पृथ्वीतटमै नौलो रहेको कुरा उक्त अवसरमा जानकारी गराइएको थियो

गुरु सेवा दलको दशौँ तालिमा कार्यक्रम शुरु हुनासाथ सावरपन्थी नं.१ का साधक श्री लालबहादुर ढकालज्यूले घोषणा गर्नुभएको उक्त सावर मातृका तहमा प्रवेश पाउनुहुने सिद्धाश्रम शक्ति केन्द्र प्रशासन तथा जनसम्पर्क विभागकी संयोजक साधिका विन्देश्वरी बरालज्यूलाई साप नं. २ का सदस्य साधक रामजी अर्यालज्यू र साप नं. ३ का सदस्य साधक शिशिर सापकोटाज्यूले फूलमाला र टीका लगाएर हार्दिक स्वागत गर्नुहुँदा गुरु सेवा दलका सम्पूर्ण कार्यकर्ताहरूले हर्षविभोर हुँदै तालीको गड्‌गडाहटले हार्दिक बधाई ज्ञापन गर्नुभएको थियो ।

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम बसुन्धरामा बिहान १० बजदेखि ५ बजेसम्म सम्पन्न भएको उक्त तालिम कार्यक्रममा यसपटक नौलो र प्रयोगात्मकरूपमा सम्पन्न गराइँदै तपस्यामा बढी जोड दिइनुका साथै युग निर्माण, सूक्ष्म शरीर र ब्रह्माण्ड आदि विषयमा विशिष्ट प्रशिक्षण भएको थियो ।

काठमाडौँ, ललितपुर, भक्तपुर, चितवन, कास्की, लमजुङ, स्याङ्जा, गोरखा र सर्लाही जिल्लाबाट गरी जम्मा ४८ जनाको सहभागिता रहेको उक्त तालिम कार्यक्रममा पूजन गर्ने सौभाग्य पाउनुहुने साधक साधिकाहरूमा शकुन्तला तिमिल्सिना, ज्ञानु रेग्मी, विष्णु सापकोटा, संगीता लामिछाने, सिद्धि महर्जन, लक्ष्मण आचार्य, मदनलाल श्रेष्ठ, वृहस्पति सापकोटा, विश्वप्रेम ढकाल, भोजराज सापकोटा र प्रभुसन्दर श्रेष्ठ हुनुहुन्थ्यो ।

तालिम कार्यक्रमको चिरप्रतिक्षित र कौतुहलको विषय रहेको परमपूज्य सद्‌गुरुदेवबाट प्राप्त ग्रेडिङ्गअनुसार कार्यकर्ताहरू पदोन्नत हुनुभएको थियो जसमा विनिता शर्मा र हरि भट्टराई गोरक्षबाट निखिल रङमा, भुवनराज पाण्डेय रातोबाट गोरक्ष, विनायक ज्ञवाली, मुकेश धिताल, मोहना गिरी निलोबाट रातो, लक्ष्मण आचार्य, कैलाश सुब्बा, वृहस्पति सापकोटा र सुमित्रा लामा हरियोबाट निलो रङमा पदोन्नत हुनुभएको थियो ।

उक्त तालिम कार्यक्रममा यसपटक प्रसाद ग्रहणका लागि हरियो, निलो, रातो, गोरक्ष, निखिल रङको तहअनुसारको स्थानको व्यवस्था गरिएको थियो । त्यस्तै तालिमको क्रममा चुड्का भजनले पनि सबैजनालाई नचाएको थियो जसमा सावरपन्थी, सावर मातृकाज्यूले नृत्यमा साथ दिएर सबैलाई प्रत्येक विषयमा साथ दिँदै जाने संकेतस्वरूप प्रोत्साहित भर्नुभएको थियो ।

उक्त तालिमले सबैलाई एउटा नौलो ऊर्जा दिएको छ, हर्षित पारेको छ । उक्त तालिम कास्की, पोखराको विन्ध्यवासिनी आरती संचालन केन्द्र, २०६५ वैशाख १ गतेदेखि आधिकारिकरूपमा सम्पर्क कार्यालयमा रूपान्तरण भएको घोषणाले थप ऊर्जा थपेको थियो ।

## सावरपन्थी सदस्यद्वय नेपाल फर्कनुभयो

सिद्धाश्रम शक्ति केन्द्र सावरपन्थी सदस्य नं. १ र २ गत चैत्र ८ गते शुक्रबार नेपाल फर्कनुभयो । त्रिभुवन विमानस्थलमा उहाँको स्वागतका लागि सावरपन्थी सदस्य नं. ३ लगायत अन्य गुरु सेवा दलका सदस्यहरू जानुभएको थियो ।

संस्थागत कार्यका लागि उहाँहरू गत माघ २३ गते रुस प्रस्थान गर्नुभएको थियो ।

## सम्पर्क कार्यालय गतिविधि

सिद्धाश्रम शक्ति केन्द्र सम्पर्क कार्यालय भक्तपुरको आयोजनामा भक्तपुरको सिपाडोलस्थित श्री डोलेश्वर महादेवको मन्दिर प्रांगणमा गत चैत्र १६ गते प्रचारप्रसार तथा भजन-कीर्तन कार्यक्रम सम्पन्न भयो । दिउँसो १२:०० बजे स्तुति वन्दनाबाट शुरु भई दिउँसो ३:२० सम्म संचालन भएको थियो । स्थानीय व्यक्तिहरूको उल्लेख्य सहभागिता रहेको उक्त कार्यक्रममा भजन-कीर्तन, नृत्य एवं आश्रमसम्बन्धी विविध जानकारी प्रदान गरिएको थियो भने स्थानीय श्री बच्चुराम जंगमले मन्तव्य राख्नुभएको थियो ।

त्यस्तै, सम्पर्क कार्यालय भक्तपुरको आयोजनामा गत चैत्र २३ गते भक्तपुरको सल्लाघारीस्थित अक्सफोर्ड प्राक्टिकल इङ्लिस स्कुल प्रांगणमा आध्यात्मिक कार्यक्रम सम्पन्न भयो । बिहान ११:४५ बाट शुभारम्भ भएको उक्त कार्यक्रम दिउँसो ३:२० मा समापन भएको थियो । स्कुलका स-साना विद्यार्थी, अभिभावक, शिक्षक-शिक्षिका एवं भक्तजनहरूको उल्लेखनीय उपस्थिति रहेको उक्त कार्यक्रममा भक्तपुर सम्पर्क कार्यालयका संयोजक साधिका विनिता अर्यालज्यूले 'हालको सन्दर्भमा धार्मिक महत्व र शान्ति स्थापनामा आध्यात्मिक ज्ञानको महत्व' विषयमा प्रकाश पार्नुभएको थियो भने उक्त स्कूलका प्रिन्सिपल श्री राम दुवालले मन्तव्य व्यक्त गर्नुभएको थियो । उक्त कार्यक्रमको बीच-बीचमा भजन-कीर्तन एवं नृत्य प्रस्तुत भएको थियो ।

यसैगरी सम्पर्क कार्यालय भक्तपुरले गत चैत्र २४ गते ठिमीमा आरती संचालन केन्द्र ठिमीको व्यवस्थापनमा आरती सञ्चालन केन्द्रका कार्यकर्ताहरूका लागि प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । आरती संचालन केन्द्र बोडे तथा सिरुटार एवं सम्पर्क कार्यालय भक्तपुरका कार्यकर्ताहरूको समेत उपस्थिति रहेको उक्त कार्यक्रम दिउँसो १२:४५ देखि ५:१५ सम्म सञ्चालन भएको थियो । गु.से.द. ६ का सदस्य साधक सुविन अर्यालज्यूले जिज्ञासाको समाधान गर्नुका साथै गुरु परिचय र गुरुकार्यका सम्बन्धमा प्रकाश पार्नुभएको थियो । साधिका विनिता अर्यालज्यूले जनसम्पर्कको बारेमा प्रस्ट्याउनु भएको थियो । साधक सुविन अर्याल एवं गुसेद नं.४६ का सदस्य साधक प्रभुसुन्दर श्रेष्ठज्यूले बिक्री वितरण तथा लेखासम्बन्धी छुट्टै प्रशिक्षण प्रदान गर्नुभएको थियो ।

### सौरपानीमा तान्त्रोक्त भैरव हवन

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ तथा परमहंस स्वामी निखिलेश्वरानद महाराजको असीम कृपा, अनुकम्पा तथा आशीर्वादस्वरूप सौरपानी सम्पर्क कार्यालयले सौरपानीको गोरक्ष निखिल पीठमा चैत ४ गते सोमबार हवन सम्पन्न भयो । हवन कार्यक्रममा ३७ जनाको सहभागिता थियो ।

त्यस्तै, चैत महिनाको ५ गते मंगलबार गोरखाको सौरपानी-३ मा रहेको भगवान् बाघ भैरबको मन्दिर परिसरमा ५१ जना साधक साधिका र भक्तजनहरूको उपस्थितिमा तान्त्रोक्त भैरव हवन सम्पन्न भयो ।

परमपूज्य सद्गुरुदेवहरूको असीम कृपा, अनुकम्पास्वरूप दिव्य गुरु महोत्सव र सोही दिनको फागु पूर्णिमा पव पनि हर्षोल्लासका साथ मनाइयो ।

### गुरु माताको शुभ-जन्मोत्सव

सिद्धाश्रम शक्ति केन्द्रले परम वन्दनीय एवं पूजनीय माता भगवती श्रीमालीज्यूको पावन जन्मोत्सव हर्षोल्लासका साथ विभिन्न कार्यक्रमसहित मनाएको छ । गत चैत २६ गते मङ्गलबार (अप्रिल ८ तारीख) सम्पन्न उक्त कार्यक्रममा भजन-कीर्तन, नाचगान प्रस्तुत भएको थियो । स्तुति वन्दनाका साथ शुभारम्भ भएको शुभ-जन्मोत्सव कार्यक्रममा थुप्रै साधक साधिकाहरूको सहभागिता रहेको थियो । अपरान्ह ४:०० बजे शुरु भएको शुभ-जन्मोत्सव कार्यक्रम बेलुकी अबेरसम्म कायम रहेको थियो । उक्त दिन आश्रम परिसरमा दीपावली गरिनुका साथै माताजीलाई मनपर्ने परिकार खीर प्रसाद पनि वितरण गरिएको थियो ।

### पोखराको विन्ध्यवासिनीमा सम्पर्क कार्यालयको स्थापना

सिद्धाश्रम शक्ति केन्द्रको वृद्धि विकाससँगै देशभरि यसका सम्पर्क कार्यालयहरूको पनि वृद्धि भइरहेको छ । यस क्रममा परमपूज्य सद्गुरुदेवहरूको आशीर्वाद र कृपा र कार्यकर्ता साधक साधिकाहरूको अथक मेहनत र लगनको फलस्वरूप गत वैशाख १ गतेदेखि लागू हुने गरी कास्कीको पोखरास्थित विन्ध्यवासिनी आरती सञ्चालन केन्द्र सम्पर्क कार्यालयमा रूपान्तरित भएको छ । यसरी देशभरि संस्थाको सम्पर्क कार्यालयको सङ्ख्या सत्र पुगेको छ ।

# गुरुदेवसँगको पहिलो भेट

मेरा सम्पूर्ण इन्द्रियहरू एकपटक पुनः गुरुचरणमा नै लाग्न पुगे । आत्माले भनिरहेको थियो– तैँले खोजिरहेको व्यक्तित्व सामुन्ने नै हुनुहुन्छ । जसको लागि यति धेरै वर्षदेखि भट्किरहेको छस्, उहाँ यहीं हुनुहुन्छ । उहाँलाई नै प्राप्त गर्नाले हृदयको गाँठो खुल्दछ, शंका र श्रापहरूको छेदन हुन सक्दछ र समस्त दुष्कर्महरूको छेदन हुन सक्दछ तथा जसको माध्यमबाट ब्रह्मको साक्षात्कार सम्भव हुन सक्छ ।

**भिद्यते हृदय-ग्रंथि, छिद्यन्ते सर्व संशयाः।**
**क्षीयन्ते चास्य कर्म्माणि तस्मिन् दृष्टे परावरे ॥**

संसार सिन्धुलाई पार गर्नका लागि एक मात्र साधन छ– गुरु, जो समर्थ हुनुहुन्छ यस प्रकारका बाधाहरूबाट पार लगाउनका लागि । शारदा तिलकको यो कथन स्मरण हुन गयो–

**संसार सिन्धोस्तरणैक हेतून । दधे गुरुन् मूर्धिन शिव स्वरूपान् ।**

**रजांसि येषां पद पंकजानां । तीर्थाभिषेक श्रियमावहन्ति ॥**

मैले परमहंस स्वामीज्यूको चरणमा शिर नुहाएँ । गुरुको मुखारविन्दबाट पहिलो वाक्य विस्सृत भयो–

अभयास्तु ।

मैले त्यसै समयमा आफूलाई अभय सम्झन लागैं । हुन सक्छ, मानिसलाई यो आश्चर्यजनक लाग्यो होला तर त्यसबेलाको मेरो चारैतिरको माहौल नै यस्तै थियो । फेरि कैयौं पटक मलाई संकेत मिलिसकेको थियो– चाँडै नै मलाई योग्य गुरुको प्राप्ति हुनेछ र उहाँ स्वामी सच्चिदानन्द हुनुहुन्छ ।

आरिफा के जामे - हक नोशीदः अंद,
शजहाँ दानिस्तः वा पोशीदः अंद,

हर किरा इसरारे -हक अमोख्तन्द, मुहु कर्दन्दो दहानश दीख्तन्द ॥

यो थियो मेरो गुरुसँगको प्रथम

साक्षात्कार । यसपछि त उहाँको असीम कृपा ममाथि निरन्तर बनिरह्यो र अपार्थिवरूपमा आज पनि उहाँको मार्गदर्शन मलाई मिलिरहेको छ ।

यस घटनापश्चात् बीस दिनसम्म मलाई अलग्गै राखियो । गुरुभाइ विज्ञानानन्दले मलाई साधनाहरूको उच्चस्तरले अभ्यास गराउँथे, चौबीस घण्टामा बीस घण्टा त यस कार्यमा बित्न लाग्यो । बाहिरको संसारसँग मेरो सम्बन्ध टुटिसकेको थियो । म र विज्ञानानन्द मात्रै थियौँ र बराबररूपमा दीक्षा मार्गपछिको पृष्ठभूमि तयार भइरहेको थियो ।

बीसौँ दिनको साँझ मेरो परीक्षा लिइयो । परीक्षामा सफल भएको हुनाले एकाइस दिनमा गुरुदेवले मलाई दीक्षा दिनुभयो । सहस्रदल कमल प्रतिस्थापन गर्नुभयो र कुण्डलिनी छोएर मेरो शरीरमा शक्तिको संचार गर्नुभयो । मेरो शिरमा गुरुको पावन हात थियो, म त्यस क्षणलाई आफ्नो सम्पूर्ण पूण्यको मूल जान्न पाएर कृतकृत्य भइरहेको थिएँ ।

यसपछि करिव ६ महिना म पूज्य गुरुदेवको साहचर्यमा रहें । यसको अनन्तर उहाँले मलाई पुन: गृहस्थ जीवन पालनको आज्ञा दिनुभयो र लोकमा गएर नि:स्पृह भावबाट मनन गर्ने आज्ञा दिनुभयो । यद्यपि म त्यस स्थानलाई छोड्न चाहन्न थिएँ तर गुरुआज्ञा सर्वोपरि थियो । ती ६ महिनामा उहाँले मलाई जे दिनुभयो, त्यो अक्षय छ, मेरो जीवनको समस्त श्रेय एवं प्रेय हो, जीवनको अमूल्य निधि हो ।

ती दिनहरूमा निरन्तर साधनाहरूमा रत रहन्थें । एकपटक म दिनभरि व्यस्त रहेको थिएँ । साँझ हामी सबै शिष्य थाकेर सुत्न गयौँ । रातिको एक बजे अचानक आँखा खुल्यो । बाहिर हेर्दा त चन्द्रमाको शीतल चाँदनी बर्षिरहेको थियो । म उठेँ र कुटीबाट बाहिर निस्कें । पूर्णमासको रात थियो । चारैतिर स्निग्धता, उज्ज्वलता बर्षिरहेको थियो । अगाडि हेर्दा त गुरुदेव एउटा स्फटिकको शिलामा सिद्धासन लगाएर ध्यान मग्न बस्नुभएको थियो । उहाँको वरिपरि विशेष प्रकारको ओज र प्रभामण्डल थियो । थोरै सौभाग्यशालीहरूले मात्र यस्तो क्षणलाई हेर्ने अवसर पाउँछन् । त्यस दृश्यको वर्णन गर्नु यस लेखनीको वशमा छैन । क्रमश:

जुन दिन नारायण सिद्धाश्रममा जानुभयो तब अचानक एकदिन उहाँले परमयोगी भृगु महाराजसमीप गएर लोकोत्तर साधना सिक्ने इच्छा प्रकट गर्नुभयो । त्यस दुब्लो पातलो संन्यासीलाई देखेर भृगु महाराजले उहाँलाई भन्नुभयो– सिद्धाश्रममा प्रवेश पाइसक्यौ, यो राम्रो कुरा हो तर अझै पनि तिमीमा त्यो क्षमता आएको छैन जुन यस प्रकारको साधनाका लागि आवश्यक छ । नारायणले एकछिनका लागि आँखा उठाएर उहाँतिर हेर्नुभयो । त्यस हेराइमा दृढ संकल्पशक्ति र आगो भरिएको थियो । परन्तु तत्कालै आफूलाई संयमित गरेर नारायणले भन्नुभयो– म जहाँ उभिएको छु त्यही उभिएको छु, तपाईंले मेरो दृढतालाई आँक्नु भएपछि मात्र मलाई सिकाइदिनुहोस् । त्यही स्थानमा चार दिन, चार रात अडिग उभिएर उहाँले आफ्नो प्रमाणपत्र दिनुभयो । महामुनिले प्रसन्न भएर भन्नुभयो– मलाई विश्वास भयो कि यस तेजस्वी युवक सिद्धाश्रममा महत्त्वपूर्ण भूमिका प्रस्तुत गर्न सक्ला ।

## श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा कोटिकोटि साष्टाङ्ग दण्डवत् प्रणाम

२०६४ माघ २८ गते (श्रीपञ्चमी) राती ८.१५ बजे नरदेवी स्थित मेरो छ तले घर आगलागी भई माथिल्लो चार तला बस्न नहुने गरी ध्वस्त भयो । आफू संयमित हुन अति मुस्किल पीडादायी क्षणमा सद्गुरुदेवहरूको असिम कृपा एवं अनुकम्पाबाट दुर्घटनास्थलमा उपस्थित भई, पछिल्ला दिनहरूमा भेटघाट गरि तथा फोनद्वारा समेत धैर्य धारणको लागि सान्त्वना दिनु हुने सिद्धाश्रम शक्ति केन्द्रका गु.से.द, आ.ने, आ.स.ने, आ.उ.ने तथा का.स.समूहका देहाए सदस्यहरू प्रति कृतज्ञता सहित धन्यवाद ज्ञापन गर्दछु । साथै सीधा भेटघाट नभएतापनि आत्मिकरूपले सद्भाव राखि तथा सहयोग पुर्‍याउनु हुने सम्पूर्ण साधक साधिकाहरू प्रति आभार व्यक्त गर्दछु ।

शिशिर सापकोटा, विन्देश्वरी बराल, प्रेम लामा, सुविन अर्याल, विशाल गौतम, हरि भट्टराई, कोपिला थापा, जयलाल गुरूङ, अनु श्रेष्ठ, होमबहादुर थापा, मञ्जु सिग्देल, आशिष अधिकारी, भुवनराज पाण्डेय, मुना राई, विष्णु सापकोटा, किरिट गिरी, बालकृष्ण श्रेष्ठ, मोहना गिरी, मुकेश धिताल, सिद्धि महर्जन, जयबहादुर मल्ल, लक्ष्मण आचार्य, वृहस्पति सापकोटा, नीता प्याकुर्‍याल, कैलाश सुब्बा एवं भोजराज रेग्मी, किशोर श्रेष्ठ, मिनु सिग्देल, लक्ष्मण कार्की, शान्ता राई, विजय शाही, महेन्द्रकुमारी राई, सावित्री सिग्देल, तेजस्वी गिरी, सुमित्रा सिलवाल, भगवान् पाण्डे, दिनकुमार के.सी, गोकुल लिम्बू, इन्द्रजङ्ग थापा, सुनिता रेग्मी, रीता खत्री, उमा ढकाल, रामगोपाल फैंजु, सुनिता न्यौपाने, सविना आचार्य, साधनासिंह शाही, नन्दा बिष्ट, अमर भट्ट, निरुम राई एवं मनोहर अधिकारी, फौदबहादुर सुनुवार, सुमन आचार्य, गीता राई, बेलबहादुर गुरूङ्ग, बर्षा शर्मा, ज्ञानु अर्याल, विक्रम पाठक, पद्मा गुरूङ्ग, शालिग्राम सिलवाल, गौरी पराजुली, रञ्जनराज पोखरेल, सृष्टि सुवेदी, महेश सिलवाल, जमुना तिवारी, हरिचन्द्र त्रिपाठी, मैंया थापा, गिता कडैंल, सिर्जना कुइँकेल, पार्वती महर्जन, उत्तम पाठक, लक्ष्मणप्रसाद ढकाल, महेश आचार्य, सन्तुमाया लामिछाने, श्रीधरा भूर्तेल, शिवराम बानियाँ, ज्योति सैंजू, ज्योति महर्जन, रामेश्वर सिंखडा, रमा सिग्देल, अर्जुनबाबु धिताल, श्वेता थापा, सानुमैया महर्जन, उद्धव सुवेदी, सुनयना श्रेष्ठ, वनिता पाठक, किशोर थापा, केशव पाण्डे, शेखरनिधि पौड्याल, अशोक देवकोटा, सुदीप पौडेल, जीवनमैंया कार्की एवं कमला सोडारी, राजकुमार सिलवाल, सुस्मिता देवान, प्रचण्डकुमार राजभण्डारी, शेखर पौडेल, अञ्जु थापा, भवानी थपलिया, तारा गौतम, मिनु श्रेष्ठ, चन्द्रकला राई तथा राधादेवी श्रेष्ठ । साथै म र मेरो परिवारको विषम असमञ्जस्य स्थितिमा सम्पूर्ण साधक साधिकाहरूलाई सद्भाव र सहयोगको लागि दिग्दर्शन गरि दिनु हुने सा.प.नं. १ र २ का श्रद्धेय दाइहरूमा हार्दिक आभार व्यक्त गर्दछु ।

**साधक प्रभुसुन्दर श्रेष्ठ**

नरदेवी, काठमाडौं

# गुरु गीता

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**मननं यद्भवं कार्यं**
**तद्वदामि महामते ।**
**साधुत्वं च मया दृष्ट्वा**
**त्वयि तिष्ठति सांप्रतम् ॥९९॥**

भावार्थ : साधकहरूले परम तत्त्वको निरन्तर मनन एवं चिन्तन गरिरहनु आवश्यक छ जसको म रहस्योद्घाटन गर्दछु । सुपात्र शिष्य वा साधकलाई मात्र यस रहस्यको भेद बताउनुपर्छ किनकि कुपात्रलाई दिएको विद्या कहिले पनि सफल हुँदैन । उब्जाउ भूमिमा रोपिएको बीऊ फलदायी वृक्ष बने जस्तै सुपात्रलाई प्रदान गरिएको विद्या सुफलित एवं कल्याणप्रद हुन्छ । तसर्थ, यस रहस्यलाई प्रदान गर्नु अघि पात्र-कुपात्रको निर्णय गर्नु पर्दछ ।

**सर्व श्रुतिशिरोरत्न**
**विराजित पदाम्बुजः ।**
**वेदान्ताम्बुजसूर्यो यः**
**तस्मै श्रीगुरवे नमः ॥१००॥**

भावार्थ : शास्त्र ज्ञानरूपी मुकुटले सुशोभित, सुन्दर चरणकमल भएका, वेदान्त ज्ञानरूपी कमललाई विकसित गर्नका लागि सूर्यसमान गुरुदेवलाई म अत्यन्त विनम्र भावले नमस्कार गर्दछु । वेदान्तको अर्थ हो– जीव र ब्रह्मैक्यलाई प्रतिपादित गर्ने उपनिषद् ज्ञान । यस रहस्यलाई नबुझेसम्म जीव बन्धनमुक्त हुन सम्भव छैन । तसर्थ, उपनिषद् ज्ञानलाई प्राप्त गर्न गुरुको निकटता प्राप्त गरेर उहाँको सेवा-सुश्रुषा गर्नु पर्दछ ।

**चैतन्य शाश्वतं शान्तं**
**व्योमातीतं निरंजनम् ।**
**नादबिन्दु कलातीतं**
**तस्मै श्रीगुरवे नमः ॥१०१॥**

भावार्थ : चैतन्य रूप, सदासर्वदा शान्त, आकाशभन्दा पनि माथि, मायारहित, नाद, विन्दु र कलाभन्दा पनि बेग्लै यस्तो दिव्य गुरुलाई म शुद्ध चिन्तनयुक्त हृदयदेखि नमस्कार गर्दछु । गुरुको शरीर हेरेर यो कहिल्यै सोच्नु हुँदैन– उहाँ हामीजस्तै हुनुहुन्छ र हाम्रो शरीरजस्तै उहाँको पनि शरीर हो । गुरुको शरीरप्रति यस्तो चिन्तन कदापि राख्नु हुँदैन किनकि त्यस शरीरमा यस्तो दिव्य ज्ञान समाहित छ जसले स्वयंमा ब्रह्माण्डका समस्त सम्भावनाहरूलाई समेटेको छ ।

**अनेकजन्म संप्राप्त-**
**सर्वकर्म विदाहिने ।**
**स्वात्मज्ञान प्रभावेण**
**तस्मै श्रीगुरवे नमः ॥१०२॥**

भावार्थ : आफ्ना दिव्य ज्ञानको प्रभावले शिष्यहरूका अनेक जन्म-जन्मान्तरका समस्त संचित शुभ, अशुभ कर्मलाई समाप्त गरेर यस जन्म-मृत्युको बन्धनबाट मुक्ति प्रदान गर्ने गुरुलाई म बारम्बार नमस्कार गर्दछु । गुरु कर्म बन्धनबाट मुक्ति प्रदान गर्नका लागि शिष्यलाई निस्काम कर्म मार्गमा प्रवृत्त गराउनु हुन्छ । निस्काम कर्मबाटै शिष्यको मन अहंकाररहित एवं निर्मल हुन्छ । अनि मात्र त्यस दिव्य ज्ञानको उत्पत्ति सम्भव हुन्छ । जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको दिव्य स्वरूपको बारेमा जान्नु र बुझ्नु हामी मनुष्यको वशको कुरा होइन। तैपनि यस स्तम्भमार्फत केही मात्रामा श्री निखिलेश्वर शतकम्लाई क्रमशः प्रकाशित गर्दै लगिएको छ। यस प्रयासबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ भन्ने कुरामा हामी विश्वस्त छौं।**

॥८९॥

**नोपासिता त्वदुपदिष्ट-सुसाधनाऽपि,**
**देवार्चनं च सविधिं न कृतं कदापि।**
**चित्तं प्रयाति दुरितानि विचिन्त्य कम्पं;**
**नान्या गतिर्मम गुरो ! शरणं प्रदेहि॥**

हे गुरुदेव ! म जहिलेदेखि हजूरको सम्पर्कमा आएँ, तबदेखि नै याचकवृत्ति अपनाएर आफ्नो झोला थापेर बसेको छु। भवादृश सद्गुरु प्राप्त गरेर पनि जसै मेरो मन छट्पटाउन थाल्छ, त्यसै म आफ्नो शिष्यत्वका कमी, कमजोरीका बारेमा सोचेर मन छियाछिया हुन्छ र मेरो आत्मविश्वास हल्लिन थाल्छ किनभने म लाख प्रयत्नका बावजूद पनि शिष्यको कसीमा खरो उत्रन असमर्थ छु। हे प्रभु ! मैले हजूरबाट प्राप्त सुन्दर साधनाहरूलाई न त यथोचितरूपमा सम्पन्न गरें, न उपासना नै गरें, न त सम्पूर्ण विधि-विधानका साथ कहिल्यै देवार्चना नै गरें। आफ्ना चीरसंचित पापहरूका बारेमा सोच्दा मन थरथर काम्न थाल्छ। हे गुरुदेव ! हजूरबाहेक मेरो अन्य कतै गति छैन। तसर्थ, अब हजूर मलाई कृपापूर्वक आफ्नो शरण प्रदान गरेर उम्काई दिनुहोस्।

॥९०॥

**रोगप्रहार-विकलं स्थविरत्वरुद्धं,**
**दौर्बल्यमेति सततं समनः शरीरम्।**
**आयुर्विनश्यति गतिर्नहि साधनायां;**
**किं मे भविष्यति गुरो ! शरणं प्रदेहि॥**

मानव जीवनको दुर्लभता संसारलाई थाहा छ। तर त्यसको प्राप्तिको उपयोगिता सफल आध्यात्मिक उत्कर्षलाई सम्पन्न गर्नमा नै छ। यस जीवनको बाल्यकालदेखि नै यस तथ्यसँग म राम्ररी परिचित छु। तैपनि हे प्रभु ! आफ्नो क्षीण संकल्पशक्ति एवं साहसको कमीका कारण तथा पूर्वसंचित पापहरूका अधीन भएर मैले आफ्नो जीवनको अधिकांश समय व्यर्थैमा खेर फालें। प्रबल रोगहरूका अनवरत प्रहारका कारण तथा बृद्धावस्थाले मेरो मन र शरीर दुवै दुर्बल भइसके, प्रत्येक क्षण मूल्यवान आयु व्यर्थका कार्यहरूमा नष्ट भइरहेको छ र साधनाहरूमा मेरो सफल गति पनि छैन। भविष्यमा मेरो कुन गति हुने हो ? मलाई रातदिन यही चिन्ताले सताइरहेको छ। हे करुणामय गुरुदेव ! हजूरले अमोघ शरण दिनु भएर मलाई यस भवसागरबाट पार गराई दिनुहोस्, मेरो पुनः पुनः यही विन्ति

# प्राण मुद्रा

**तस्मात्सर्व प्रयत्नेन प्रबोधयितुमीश्वरीम्**
**ब्रह्मद्वारमुखे सुप्तां मुद्राभ्यासं समाचरेत् ।**
**हठयोग प्रदीपिका** (३.५)

साधनाको क्षेत्रमा पूर्णरूपले अघि बढ्दा अपनाउनै पर्ने महत्त्वपूर्ण विद्या 'मुद्रा'का बारेमा पनि धेरथोर जानकारी अवश्य हुनुपर्दछ । मुद्राका बारेमा अघिल्ला अङ्कहरूमा पनि केही मात्रामा जानकारी भइसकेको छ । ध्यान साधना, मन्त्रजप वा अन्य विभिन्न तान्त्रिक प्रयोगहरू सम्पन्न गर्दा मुद्राको प्रयोग अनिवार्य हुन्छ । मुद्राले विश्वब्रह्माण्डमा व्याप्त दैवीशक्ति अथवा ध्यान साधनाबाट प्राप्त शक्तिहरूलाई शरीरका विभिन्न भागबाट प्रवाह गराउँदै कुण्डलिनी शक्तिलाई जागृत गराउने गर्दछ । विभिन्न सूक्ष्म शक्तिहरू प्रवाह हुने नाडी एवं ग्रन्थीहरूलाई सशक्त एवं सक्रिय गराउने कार्य मुद्राले गर्दछ । साधनात्मक तपशक्तिलाई सुव्यवस्थित तरीकाले शरीरभित्र नै स्थापित गराउने प्रक्रियालाई मुद्रा भनिन्छ । हात एवं अन्य अङ्गहरूको प्रयोग गरी सहस्रार एवं निधारको मध्यभागबाट प्रवेश भएर आएका दिव्य ऊर्जालाई शरीरबाट बाहिर जानबाट रोकेर शरीरभित्र नै सञ्चार गराउने प्रक्रियाको नाम नै वास्तवमा मुद्रा हो । पञ्चतत्त्वद्वारा निर्मित हाम्रो शरीरका पाँच औंलाहरूले तिनै ब्रह्माण्डका पञ्चतत्त्वहरूलाई प्रतिनिधित्व गरी ब्रह्माण्डीय शक्ति र हाम्रो शरीरबीचको शक्तिलाई सन्तुलित र समन्वय गराइरहेका हुन्छन् अर्थात् शरीरमा स्थित सूक्ष्मशक्ति र ब्रह्माण्डस्थित देवीदेवता वा दिव्य शक्तिबीच सम्पर्क गराउने सूत्रको रूपमा पनि मुद्रालाई लिइन्छ । त्यसैले, अधिकांश मुद्राहरूमा हातका औंला प्रयोग भएका हुन्छन् । यिनै पञ्चतत्त्वको सन्तुलनमा घटबढ भएमा शारीरिक समस्याहरू देखा पर्दछन् भने मुद्राले

त्यस घटबढलाई सन्तुलन कायम गराउँदछ । यसरी मुद्राले बाहिरी (ब्रह्माण्ड) र भित्र (शरीर/पिण्ड) को पञ्चतत्त्वको सन्तुलन गराउँछ भने ब्रह्माण्डमा व्याप्त दैवीशक्ति र शरीरभित्रको शक्ति (कुण्डलिनी) लाई एक आपसमा सन्तुलन कायम गराइराख्ने सूत्रको रूपमा कार्य गर्दछ । यस्तो अद्वितीय सम्पर्क सूत्रको रूपमा रहेको मुद्राको अभ्यास गर्दै आफूले प्राप्त गरेका ध्यान एवं साधनालाई नियमितरूपमा अपनाउन सकेमा पक्कै पनि हामीभित्र लुकेर रहेका दिव्य क्षमताहरूलाई उजागर गर्न सकिन्छ । प्राण मुद्राले शरीरका पाँच शक्तिमध्ये प्राणशक्तिलाई सक्रिय बनाउँछ र प्राणशक्तिको क्षेत्र छाती प्रदेशलाई अत्यन्तै दरिलो पार्दछ ।

**विधि–**

– ढाडलाई सिधा गरी पद्मासन वा सुखासनमा बस्ने,
– दुवै हातलाई घुँडामाथि राखी हत्केला माथितर्फ फर्काएर राख्ने,
– यो मुद्रामा चित्रमा देखाए जस्तै गरी बुढी औंलासँग कान्छी र साइँली औंलाको अग्रभागलाई एक आपसमा मिलाउने र बाँकी चोरी औंला र बीचको औंला जोडेर सिधा गरी राख्ने,
– यसरी दुवै हातका औंलाहरूबाट प्राण मुद्रा बनाई ध्यान वा मानसिक मन्त्र जप पनि गर्न सकिन्छ ।

**फाइदाहरू–**

यस मुद्रामा अग्नितत्त्वयुक्त बुढी औंला, पृथ्वीतत्त्वयुक्त साइँली औंला, जलतत्त्वयुक्त कान्छी औंलाको समन्वयबाट वायुतत्त्व र आकाशतत्त्वलाई शरीरमा सक्रिय र सशक्त बनाई नाभीभन्दा माथि र घाँटीभन्दा तलको हृदयको क्षेत्रलाई दरिलो बनाउँदछ । शरीरको प्राणशक्तिलाई जागरण गराई शरीर स्फूर्तिदायक, आरोग्य र ऊर्जावान् गर्दछ । आँखाका विभिन्न समस्या समाप्त गर्दै आँखाको ज्योति बढाउँछ, प्रतिरोधात्मक शक्ति वृद्धि

# साबर संरचनाबाट प्राप्त
# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री साबर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना-ऊर्ध्वसंगति'को खण्ड घ (साबर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## गुरू

मन्त्र साधनामा अगाडि बढ्नलाई मात्र होइन, समस्त प्राणीका लागि नै गुरु अति आवश्यक एवं अपरिहार्य हुन्छ । संसारका सम्पूर्ण शक्तिहरूमा गरिमामय स्थानमा विराजमान गुरु शब्द आफैमा दिव्यतम् छ, पवित्र छ । गुरु शब्दको महिमा, उच्चता न त शब्दको वर्णनमा सम्भव छ, न त कुनै शास्त्रको व्याख्याभित्र । गुरु शब्दको पवित्रता आफैमा अनुपम छ, अद्वितीय छ ।

गुरु शब्द हाम्रो समाजमा नौलो नभए पनि यसको गूढतम् रहस्य एवं गरिमामय उच्चताको बारेमा हाम्रो समाज अनभिज्ञ नै छ । यसैले पनि आज गुरु शब्दको अपहेलना भएको छ, अनादर भएको छ । गुरु शब्द समाजका व्यक्तिलाई उडाउने, उल्याउने, हँसी-मजाक गर्ने शब्दको पर्याय बनेको छ । कति दुःखलाग्दो कुरा ! जसले संसारका व्यक्तिलाई तार्ने क्षमता राख्नुहुन्छ त्यस्ता दिव्यतम् व्यक्तित्वलाई मात्र गुरु पदले विभूषित गरिन्छ । उहाँहरूलाई गुरु शब्दले सम्बोधन गरिन्छ । गुरु शब्द प्राचीनकालदेखि नै अत्यन्त दिव्य भएको र यसको उच्चारण केवल दिव्यतम् व्यक्तित्वका साक्षात् प्रतिमूर्तिहरूलाई मात्रै गरिन्थ्यो । जसले मानवलाई सांसारिक भवसागरबाट तार्न सक्नुहुन्छ, जसले अन्धकाररूपी मनुष्यको जीवनलाई वास्तविक गन्तव्य एवं ज्ञानरूपी उज्यालोतर्फ उनमुख गराउनुहुन्छ, आध्यात्मिक गूढ रहस्यलाई उजागर गराउनुहुन्छ र आफैमा तत्त्ववेत्ता हुनुहुन्छ, त्यस्ता व्यक्ति मात्र गुरु हुनुहुन्छ, त्यस्ता दिव्यतम् व्यक्ति, व्यक्तित्वलाई मात्र गुरु शब्दले पुकारिन्छ, श्रद्धा गरिन्छ । यस गूढ कुरालाई तपाईं हामीले पनि बुझ्नुपर्दछ ।

समाजका व्यक्तिहरूले गुरु शब्दको गरिमामय पदलाई नबुझी कसैले आफूले आफैलाई गुरु घोषणा गर्दछन्, कसैले गुरु पदले सम्मान गर्दछन् । संस्कृत बोल्न जान्दैमा, विद्वान हुँदैमा, प्रवचन दिन सक्दैमा, सामान्य मन्त्र-तन्त्र जान्दैमा, दुई-चारवटा साधना सिद्ध गर्दैमा, सिद्धि प्राप्त गर्दैमा, पहेँलो लुगा, माला, सल लगाउँदैमा, जोगी बन्दैमा, संन्यासी बनेर हिँड्दैमा, ज्योतिष जान्दैमा, पूजाआजा गराउन सक्दैमा, राम कथा, भागवत् कथा आदि राम्रोसँग भन्दैमा, पूजन गराउँदैमा आदि इत्यादि क्षमता, सामर्थ्य हासिल गर्दैमा कोही गुरु पनि बन्दैन, गुरु भन्न पनि मिल्दैन । तर पनि आजको समयको बिडम्बनाको कारणले पनि हुन सक्छ, क्षमतावान् दिव्यतम् व्यक्तित्वको अभावमा माथि उल्लेख भए जस्तै सामान्य व्यक्तिले पनि आफूलाई गुरु पदमा आसीन गराई सीधासाधा समाजका अज्ञानी मानिसहरूलाई शिष्य बनाई मानसिक एवं शारीरिक शोषण गरेको पाउँछौँ । नाम मात्रका गुरुले न अध्यात्मका गूढ कुरा बुझाउन सक्छन्, न त धर्म र धार्मिकताका मूल तत्त्वलाई बुझाउन सक्छन्, न त तपस्याभित्रको वास्तविक रहस्यलाई नै उजागर गर्न सक्छन् । यसैले गुरु मान्दा, गुरु स्थापना गर्दा दिव्यतम् व्यक्तित्वलाई मात्रै गुरु मान्नु पर्दछ । शिवस्वरूपका गुरुहरूले मात्रै वास्तविकरूपमा मनुष्यलाई मोक्ष दिन सक्नुहुन्छ । शास्त्रमा गुरुलाई सर्वोपरि मानिएको छ । गुरु नै सृष्टि गर्न सक्ने ब्रह्माण्डस्वरूप हुनुहुन्छ, सृष्टिलाई व्यवस्थित गर्ने, चलाउने विष्णुस्वरूप हुनुहुन्छ र सृष्टिलाई संहार गर्ने महेश्वर हुनुहुन्छ । त्यति मात्रै होइन, सारा संसारलाई आफ्नो इशारामा चलाउन सक्ने साक्षात् परब्रह्म हुनुहुन्छ । त्यसैले यस्ता अद्वितीय व्यक्तित्वलाई मात्रै हामीले गुरु मान्नुपर्दछ ।

साधक, साधिक एवं शिष्यका प्राणाधार नै गुरु हुनुहुन्छ । गुरु नै सर्वस्व हुनुहुन्छ । त्यसैले मन्त्र साधनालगायत जुनसुकै क्षेत्रमा सफलता प्राप्त गर्न गुरुको नै कृपा, आशीर्वाद चाहिन्छ । त्यसैले, गुरु कृपा बिना न त साधना सफल हुन्छ, न त मानवजीवन नै सफल हुन्छ । त्यसैले, मन्त्र साधनामा सफलता चाहने प्रत्येक व्यक्तिको पहिलो कार्य नै गुरु प्राप्ति हो । सबैभन्दा पहिले गुरु प्राप्त गर्ने, गुरुसँग जोडिने, तत्पश्चात् गुरुकै निर्देशनअनुरूप साधनामा अगाडि बढ्नुपर्छ । गुरु सत्ता देवीदेवता एवं ऋषिहरूका लागि समेत उच्च आदरणीय सत्ताको रूपमा विराजमान रहनुभएको छ । यसरी देवहरूका लागि पनि दुर्लभ मानिने, ऋषिहरूका लागि पनि परम वन्दनीय रहने गुरु सत्ता परम आदरणीय हुनुहुन्छ, परम वन्दनीय हुनुहुन्छ । यस्तो दिव्यतम् सत्ताको सधैँ कदर गर्नुपर्दछ, आदर गर्नुपर्दछ र खुशी बनाई कृपा, आशीर्वाद प्राप्त गर्नुपर्दछ ।

जो गुरु मानेर साधनात्मकरूपमा अगाडि बढ्दछन् त्यस्ता व्यक्तिहरूलाई नै देवीदेवताले पनि कृपा, आशीर्वाद दिन्छन् र साधना सफल हुन्छ । गुरु मानेर साधनामा अगाडि बढ्दा केही तल-माथि परेमा गुरुदेवले हेरिदिनुहुन्छ, सामान्य त्रुटि, कमी-कमजोरीलाई क्षमा गरिदिनुहुन्छ । देवीदेवताहरू रिसाएर कृपा, आशीर्वाद नदिने स्थिति भयो भने पनि गुरुलाई खुशी बनाउन सकियो भने देवताहरू स्वतः नै खुशी हुन्छन् र साधना सफल हुन्छ । त्यस्तै मन्त्र स्रष्टा ऋषिहरू पनि रुष्ट हुनुभयो भने गुरु खुशी हुँदा, गुरुलाई पूर्ण आदर-सम्मान गर्दा उहाँहरूलाई पनि खुशी बनाउन सकिन्छ । कुनै मन्त्र कीलन गरिदिनु भएको भए पनि फुकाइदिनुहुन्छ र साधना सफल हुन्छ ।

तर स्मरण रहोस्, यदि गुरुलाई नै रुष्ट बनायौँ, गुरुलाई अनादर गर्‍यौँ भने फेरि गुरु खुशी बनाउने उपाय यस संसारमा अर्को कुनै दिव्य शक्ति हुँदैन । केवल श्रापको भागीदार बन्नुपर्ने हुन्छ । त्यसैले गुरु मानौँ, गुरुसँग जोडिऔँ, गुरुकै मार्ग-निर्देशनअनुसार अगाडि बढौँ, गुरु सत्तालाई पूर्ण आदर, सम्मान गरौँ र साधनामा सफलता प्राप्त गरौँ । जय गुरुदेव !

# रुपान्तरण

देश राजनीतिक रुपान्तरणसँगै एउटा नयाँ मोडमा उभिएको छ । लामो समयको अस्थिरता, अशान्तिपछि शान्तिको चाहनामा, समृद्धिको चाहनामा नेपाली जनताले आमूल परिवर्तन चाहेका छन् ताकि अबका दिन सुखमय रहून्, शान्तिमय रहून् । सबैभन्दा ठूलो कुरो शान्ति नै रहेछ भन्ने कुरो नेपाली जनताले प्रमाणित गरिदिएका छन् । पहिले शान्ति त्यसपछि मात्रै अरु कुरा । त्यसैले, शान्ति प्राप्तिका लागि तपाईंले हामीले जस्तोसुकै मूल्य पनि चुकाउन तयार भएको आभाष नेपालको वर्तमान परिस्थितिले देखाएको छ । त्यसैले दीगो शान्ति स्थापनाको लागि राजनैतिक रुपान्तरण सँगसँगै आध्यात्मिक रुपान्तरण पनि जरुरी छ । केवल राजनीतिक रुपान्तरण मात्रैले समाजमा शान्ति, सुव्यवस्था कायम गर्न सक्दैन । जबसम्म समस्त राजनीतिज्ञहरु, समस्त नेताहरु र समस्त जनताहरुमा आध्यात्मिक भावनाको विकास हुँदैन, आफूभित्र नै अन्तर्निहित आन्तरिक शक्तिलाई जगाइँदैन तबसम्म आनन्द र शान्ति केवल कोरा कल्पना मात्रै हुन जान्छ ।

अबको हाम्रो दिशा भनेको शान्ति प्राप्तिको लागि प्रत्येक व्यक्तिमा आत्ध्यात्मिक भावना जागरण गरेर समाजलाई शान्त र सुव्यवस्थित बनाउने हो । अर्थात् भनौं आध्यात्मिक समाजको निर्माण गर्नु हो । त्यसका लागि सबैभन्दा पहिले राजनीतिक स्थिरता जरुरी हुन्छ । जसतर्फ अहिले हाम्रो देश लम्किरहेको छ । त्यसपछि आर्थिक समृद्धि जरुरी हुन्छ, आर्थिक रुपान्तरणको जरुरी हुन्छ । जबसम्म मानिस गाँस, बास र कपासकै लागि संघर्ष गरिरहन्छ, संघर्ष गर्नुपर्ने बाध्यता हुन्छ तबसम्म उसले अरु कुरामा ध्यान दिन सक्दैन । आध्यात्मिक कुरा केवल सुन्ने विषयमा मात्रै सीमित गरिदिन्छ किनभने ऊसँग समय नै हुँदैन । जीवनलाई नै संघर्षमा बिताइदिन्छ, त्यो संघर्ष पनि केवल गाँस, बास र कपासका लागि ! के जीवन गाँस, बास र कपासको लागि मात्र हो त ? अवश्य होइन । यसपछि पनि धेरै कुराहरु छन् । हामीले यो जीवन त्यत्तिकै पाएका होइनौं । कैयौं जुनिपश्चात्को जीवन भनेर शास्त्रले पनि भनेको छ, ८४ लाख योनिको चर्चा गरेको छ, त्यसरी प्राप्त मानव योनिलाई केवल खान-लाउनमा मात्र सीमित गरिदियौं भने हामीले मानव जीवन पाएको पनि व्यर्थै हुन्छ र यो प्राप्ति होइन । ठूलो कुरो हामीले गुमाउन पुग्छौं । त्यसैले, जीवन प्राप्त गरेपछि वर्षको शुरुआतसँगै देशमा देखिएको परिवर्तनले सबैमा आध्यात्मिक भावना जाग्रित गराओस्, अब समाजलाई आध्यात्मिक समाजको रुपमा रुपान्तरण गर्नका लागि सत्प्रेरणा प्राप्त होस्, सद्‌गुरुदेवसँग हामी यही प्रार्थना गर्दछौं र सबैमा नव-वर्षको मङ्गलमय शुभकामना पनि अर्पण गर्न चाहन्छौं । यो शुभ तब मात्र हुन्छ जब वास्तविकरुपमा तपाईंले आफूले आफैलाई अध्यात्ममय बनाउनुहुन्छ । अध्यात्म भनेको कुनै यस्तो चीज होइन, यस्तो वस्तु होइन जो अरुबाट सापट लिन सकियोस्, अरुबाट प्राप्त गर्न सकियोस्, अरुले दिन सकोस् । यो त तपाईंभित्रै रहेको अन्तर्वस्तु हो, आत्माको अध्ययन हो, चिन्तन हो, मनन हो र प्रयोग अनि प्राप्ति हो । यो केवल पढ्ने र सुन्ने विषय होइन । यो त प्रयोग गर्ने र प्राप्ति गर्ने विषय हो । जसले प्रयोग गरे, उहाँहरु ऋषिमुनि भए, आजसम्म पनि हामी उहाँहरुलाई सम्झिने गर्दछौं, श्रद्धाका साथ हेर्ने गर्दछौं । जसले केवल पढे, सुनाए उहाँहरु पण्डित भए । तपाईंलाई पचासौं ऋषिमुनिहरुको नाम याद होला तर दुई चारजना पण्डितको नाम तपाईंले अहिले स्मरण गर्न सक्नुहुन्न किनभने विद्वान र साधकमा फरक छ । साधकले सृजना गर्दछ, विद्वानले त्यही साधकको सृजनालाई पढ्दछ र अरुलाई बताउँदछ । त्यसैले, समाजमा विद्वानहरु त धेरै भए, तर साधकको कमी भयो । जसको कारणले समाजमा जान्ने, सुन्ने धेरै देखिए, पढ्ने र सुनाउने, पढाउने, अर्कालाई अर्ति र उपदेश दिने धेरै देखिए तर प्रयोग गर्ने र प्रयोग गरेर त्यसबाट फाइदा लिने नगण्यरुपमा मात्रै देखिए । त्यसैकारणले समाज रुपान्तरण हुन सकेन । एकजना भ्रष्टाचार गरेर गन्हाएको व्यक्तिले अर्कालाई अर्ति उपदेश दिनु कति सुहाउने कुरा हो ? समाज त्यस्तै छ । जसले आफ्नो जीवनमा नै त्यो कुरा लागु गरेको छैन त्यही कुराको बारेमा उसको अर्ति-उपदेश सुनेर समाजले कसरी लागु गर्छ ? त्यसैले, पहिले जसले भन्दछ उसले गरेर देखाउनु पर्छ । यो कुरा हरेक क्षेत्रमा लागु हुन्छ । यदि तपाईं कुनै कुराको बारेमा अरुलाई अर्ति, उपदेश दिनुहुन्छ भने त्यो कुराको बारेमा तपाईंलाई पूर्ण ज्ञान हुनु जरुरी छ ।

त्यसैले, हाम्रो समाजमा देखिएको यो विकृतिलाई अब हामीले हटाउनु पर्छ । आमूल परिवर्तन सँगसँगै सामाजिक रुपान्तरण पनि जरुरी हुन्छ । समाजलाई पनि सही दिशातर्फ उन्मुख गराउनु पर्छ । धर्म, संघ र सम्प्रदायको आडम्बरमा समाजलाई डोऱ्याउनु पनि आफैमा एउटा विकृति नै हो । मेरो मात्रै ठीक, अरुको बेठीक भन्ने भाव यदि कुनै धर्म, संघ, संस्था, सम्प्रदायमा हुन्छ भने ऊ वास्तविकरुपमा धार्मिक हुनै सक्तैन । त्यसैले, हामी धर्म होइन अध्यात्मलाई प्रधानता दिन्छौं । धर्मभन्दा माथि उठेर अध्यात्ममा आत्मा र परमात्मा प्राप्ति गर्न खोज्छौं । यो नै वास्तवमा सही बाटो हो, यो नै वास्तवमा आजको आवश्यकता पनि हो । रुढीवाद, आडम्बर र देखावटीपनले झन् समाजलाई अन्यौलग्रस्त बनाउँछ । हेर्दा त समाजमा धेरै धार्मिक मानिसहरुको बाहुल्यता देखिन्छ तर समाज जस्ताको तस्तै रहन्छ । अन्याय, अत्याचार, भ्रष्टाचार, दुराचार यी सबै समाजबाट कहिल्यै अन्त्य हुँदैन जबसम्म देखावटी धर्म, देखावटी प्रपञ्चमा समाज लागिरहन्छ र केवल पढ्न र सुन्नमै समय बिताउँछ । त्यसैले अबको जरुरी भनेको, अबको आकश्यकताा भनेको पढ्ने, सुन्ने होइन, प्रयोग गर्ने हो ।

सिद्धाश्रम शक्ति केन्द्रले सधैं भन्ने गरेको छ- 'पढेर सुनेर होइन, आफैं अनुभव गरेर हेरौं ।' नयाँ वर्षमा तपाईं पनि अनुभव गरेर हेर्नुहोस्, हाम्रा आध्यात्मिक शक्तिहरुको अनुसन्धान गर्नुहोस्, यसभित्र प्रवेश गर्नुहोस् र भरपूर फाइदा लिँदै जीवनको वास्तविकतालाई बुझ्नुहोस् । सद्‌गुरुहरुलाई साथ लिएर सद्‌गुरुदेवहरुको आशीर्वाद, कृपा, अनुकम्पा प्राप्त गर्दै जीवनलाई आनन्दमय बनाउनुहोस् । पुनः एकपटक यहाँहरु सबैलाई यही नै हार्दिक शुभकामना !

जय गुरुदेव !